كَلَّا لَا وَزَرَ ﴿١١﴾

११) निःसन्देह कुनै शरणस्थल छैन ।

إِلَىٰ رَبِّكَ يَوْمَئِذٍ الْمُسْتَقَرُّ ﴿١٢﴾

१२) आज त तिम्रो पालनकर्ता तिरै चैन पाइने ठाउँ छ ।

يُنَبَّأُ الْإِنْسَانُ يَوْمَئِذٍ بِمَا قَدَّمَ وَأَخَّرَ ﴿١٣﴾

१३) मानिसहरूलाई आज त्यसले अगाडि बढाएको र पछाडि छाडेको कुराहरू सँग अवगत गराइनेछ ।

بَلِ الْإِنْسَانُ عَلَىٰ نَفْسِهِ بَصِيرَةٌ ﴿١٤﴾

१४) बरु मानिस स्वयं आफ्नो साक्षी छ ।

وَلَوْ أَلْقَىٰ مَعَاذِيرَهُ ﴿١٥﴾

१५) यद्यपि उसले जति क्षमायाचना गर्न खोजोस् ।

لَا تُحَرِّكْ بِهِ لِسَانَكَ لِتَعْجَلَ بِهِ ﴿١٦﴾

१६) र (हे मोहम्मद स. !) कुरआनलाई छिटै कण्ठस्थ गर्न आफ्नो जिब्रो नचलाउनुस् ।

إِنَّ عَلَيْنَا جَمْعَهُ وَقُرْآنَهُ ﴿١٧﴾

१७) त्यसलाई एकत्रित गर्नु र उसलाई पठनीय बनाउनु हाम्रो जिम्मा छ ।

فَإِذَا قَرَأْنَاهُ فَاتَّبِعْ قُرْآنَهُ ﴿١٨﴾

१८) अतः जब हामीले त्यसलाई पढ्छौं तब तपाईले त्यस पढाईको अनुशरण गर्नुस् ।

ثُمَّ إِنَّ عَلَيْنَا بَيَانَهُ ﴿١٩﴾

१९) अनि हाम्रो जिम्मामा छ उसको स्पष्टिकरण गर्नु ।

كَلَّا بَلْ تُحِبُّونَ الْعَاجِلَةَ ﴿٢٠﴾

२०) होइन, होइन तिमी शीघ्र प्राप्त हुने कुरा सित प्रेम गर्दछौ ।

وَتَذَرُونَ الْآخِرَةَ ﴿٢١﴾

२१) र आखिरतलाई (परलोकलाई) छोडिराखेका छौ,

وُجُوهٌ يَوْمَئِذٍ نَاضِرَةٌ ﴿٢٢﴾

२२) त्यस दिन धेरै अनुहारहरू प्रफुल्लित र गौरवान्वित हुनेछन्,

إِلَىٰ رَبِّهَا نَاظِرَةٌ ﴿٢٣﴾

२३) आफ्नो पालनकर्तातिर (साक्षत्कार प्राप्त गर्न) देखि राखेका हुनेछन् ।

وَوُجُوهٌ يَوْمَئِذٍ بَاسِرَةٌ ﴿٢٤﴾

२४) र कैयन् अनुहारहरू त्यस दिन उदास हुनेछन् ।

تَظُنُّ أَن يُفْعَلَ بِهَا فَاقِرَةٌ ﴿٢٥﴾

२५) बुझ्नेछन् कि उनीहरूमाथि ठूलो विपदा आउनेवाला छ ।

كَلَّا إِذَا بَلَغَتِ التَّرَاقِيَ ﴿٢٦﴾

२६) होइन-होइन जब प्राण कण्ठसम्म आइपुग्ने छ ।

وَقِيلَ مَنْ ۜ رَاقٍ ﴿٢٧﴾

२७) र भनिनेछः कि कोही झाडफूँक गर्नेवाला छ ?

وَظَنَّ أَنَّهُ الْفِرَاقُ ﴿٢٨﴾

२८) र त्यसले जान्दछ कि अब सबैबाट विदाईको समय छ ।

وَالْتَفَّتِ السَّاقُ بِالسَّاقِ ﴿٢٩﴾

२९) र एउटा खुट्टा अर्को खुट्टासित जोडिनेछ ।

إِلَىٰ رَبِّكَ يَوْمَئِذٍ الْمَسَاقُ ﴿٣٠﴾

३०) आज तिमीले आफ्नो पालनकर्तातिर प्रस्थान गर्नुछ ।

فَلَا صَدَّقَ وَلَا صَلَّىٰ ﴿٣١﴾

३१) तर उसले नत सत्य मान्यो न नमाज पढ्यो।

وَلَٰكِن كَذَّبَ وَتَوَلَّىٰ ﴿٣٢﴾

३२) बरु झूठो ठहरायो र विमुख भयो ।

ثُمَّ ذَهَبَ إِلَىٰ أَهْلِهِ يَتَمَطَّىٰ ﴿٣٣﴾

३३) अनि आफ्ना घरवालाहरूको पासमा घमण्ड गर्दै हिंडिहाल्यो ।

أَوْلَىٰ لَكَ فَأَوْلَىٰ ﴿٣٤﴾

३४) अफशोच छ तिमीमाथि, झन् धिक्कार छ ।

ثُمَّ أَوْلَىٰ لَكَ فَأَوْلَىٰ ﴿٣٥﴾

३५) धिक्कार छ र खराबी छ तिमीमाथि ।

أَيَحْسَبُ الْإِنسَانُ أَن يُتْرَكَ سُدًى ﴿٣٦﴾

३६) के मानिसले यो ठान्दछ कि उसलाई यस्तै छाडिदिइनेछ ?

أَلَمۡ يَكُ نُطۡفَةً مِّن مَّنِيٍّ يُمۡنَىٰ ۝٣٧

३७) के ऊ एउटा बाक्लो पानीको (वीर्यको) एक थोपा थिएन? जसलाई टपकाइएको थियो ?

ثُمَّ كَانَ عَلَقَةً فَخَلَقَ فَسَوَّىٰ ۝٣٨

३८) फेरि ऊ रगतको डल्लो भयो, अनि अल्लाहले उसलाई पैदा गरी ठिकठाक गऱ्यो ।

فَجَعَلَ مِنۡهُ ٱلزَّوۡجَيۡنِ ٱلذَّكَرَ وَٱلۡأُنثَىٰٓ ۝٣٩

३९) अनि उसका जोडाहरू बनायो, पुरुष र स्त्री ।

أَلَيۡسَ ذَٰلِكَ بِقَٰدِرٍ عَلَىٰٓ أَن يُحۡـِۧيَ ٱلۡمَوۡتَىٰ ۝٤٠

४०) त के उसलाई यस कुरामा सामर्थ्य छैन कि मृतकहरूलाई जीवित पारिहलोस् ।



# सूरतुल् इन्सान-७६



सूरतुल् इन्सान मदनी हो, यसमा ३१ आयतहरू र २ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) निःसन्देह मानवमाथि कालखण्डको एउटा यस्तो समय पनि बितेको छ जब कि ऊ कुनै उल्लेख्य कुरा थिएन ।

هَلْ أَتٰى عَلَى الْإِنْسَانِ حِيْنٌ مِّنَ الدَّهْرِ لَمْ يَكُنْ شَيْـًٔا مَّذْكُوْرًا ۝١

२) हामीले मनुष्यलाई एउटा मिश्रित वीर्यबाट परीक्षाको लागि सृष्टि गर्यौं, अनि हामीले उसलाई सुन्ने र देख्नेवाला बनाइदियौं ।

إِنَّا خَلَقْنَا الْإِنْسَانَ مِنْ نُّطْفَةٍ أَمْشَاجٍ نَّبْتَلِيْهِ فَجَعَلْنٰهُ سَمِيْعًا بَصِيْرًا ۝٢

३) हामीले उसलाई मार्ग देखायौं, अब चाहे ऊ कृतज्ञ बनोस् वा कृतघ्न ।

إِنَّا هَدَيْنٰهُ السَّبِيْلَ إِمَّا شَاكِرًا وَّإِمَّا كَفُوْرًا ۝٣

४) निश्चित रूपले हामीले इन्कार गर्नेहरूको निम्ति हतकडी र तौक र प्रज्वलित आगो तयार गरेका छौं ।

إِنَّا أَعْتَدْنَا لِلْكٰفِرِيْنَ سَلٰسِلَا۟ وَأَغْلٰلًا وَّسَعِيْرًا ۝٤

५) निश्चय नै सदाचारी मानसिहरूले यस्तो पेय पदार्थ पिउनेछन् जसमा काफूरको मिश्रण हुनेछ ।

إِنَّ الْأَبْرَارَ يَشْرَبُوْنَ مِنْ كَأْسٍ كَانَ مِزَاجُهَا كَافُوْرًا ۝٥

६) यो एउटा मूल हो जसबाट अल्लाहका सेवकहरूले पिउनेछन् र त्यसबाट नहरहरू निकाल्नेछन् ।

عَيْنًا يَّشْرَبُ بِهَا عِبَادُ اللّٰهِ يُفَجِّرُوْنَهَا تَفْجِيْرًا ۝٦

७) यिनीहरूले नजर (मन्नत) पूर्ण गर्दछन् र त्यस दिनबाट तर्सन्छन् जसको आपदा चारैतिर व्यापक हुनेछ ।

يُوْفُوْنَ بِالنَّذْرِ وَيَخَافُوْنَ يَوْمًا كَانَ شَرُّهٗ مُسْتَطِيْرًا ۝٧

८) र अल्लाह सँगको प्रेममा (स्वयं खानको इच्छा भएपनि) निमुखा, अनाथहरू र कैदीरुलाई खाना खुवाउँछन् ।

وَيُطْعِمُونَ الطَّعَامَ عَلَىٰ حُبِّهِ مِسْكِينًا وَيَتِيمًا وَأَسِيرًا ۝

९) हामी त केवल अल्लाहको प्रसन्नताको निम्ति तिमीलाई खुवाउँछौ, तिमीसित न कुनै पुरस्कार चाहन्छौं र न कृतज्ञता ज्ञापन ।

إِنَّمَا نُطْعِمُكُمْ لِوَجْهِ اللَّهِ لَا نُرِيدُ مِنكُمْ جَزَاءً وَلَا شُكُورًا ۝

१०) हामीलाई आफ्नो पालनकर्तासित त्यस दिनको डर लाग्छ, जो उदासी र अत्यन्त कठोरवाला हुनेछ ।

إِنَّا نَخَافُ مِن رَّبِّنَا يَوْمًا عَبُوسًا قَمْطَرِيرًا ۝

११) अतः अल्लाहले उनीहरूलाई त्यस दिनको नराम्रो कुराबाट बचाइहाल्यौं र उनीहरूलाई उज्जवलता र खुशी प्रदान गर्‍यो ।

فَوَقَاهُمُ اللَّهُ شَرَّ ذَٰلِكَ الْيَوْمِ وَلَقَّاهُمْ نَضْرَةً وَسُرُورًا ۝

१२) र उनीहरूको संतोषको बदलामा उनीहरूलाई जन्नत र रेशमी वस्त्र प्रदान गर्‍यो ।

وَجَزَاهُم بِمَا صَبَرُوا جَنَّةً وَحَرِيرًا ۝

१३) यिनीहरूले त्यहाँ पलङ्गमाथि तकिया लगाएर बसेका हुनेछन् त्यहाँ न सूर्यको गर्मी देख्नेछन् न जाडोको तीव्रता ।

مُّتَّكِئِينَ فِيهَا عَلَى الْأَرَائِكِ ۖ لَا يَرَوْنَ فِيهَا شَمْسًا وَلَا زَمْهَرِيرًا ۝

१४) र ती स्वर्गका छायाँहरू उनीमाथि झुकेका हुनेछन् र त्यसका फलका गुच्छाहरू तल झुण्डिएका हुनेछन् ।

وَدَانِيَةً عَلَيْهِمْ ظِلَالُهَا وَذُلِّلَتْ قُطُوفُهَا تَذْلِيلًا ۝

१५) (सेवकहरू) चाँदीका भाडाहरू र शीशाका बर्तन लिएर उनीहरूको चारैतिर घुम्नेछन् ।

وَيُطَافُ عَلَيْهِم بِآنِيَةٍ مِّن فِضَّةٍ وَأَكْوَابٍ كَانَتْ قَوَارِيرَا ۝

قَوَارِيرَا۟ مِن فِضَّةٍ قَدَّرُوهَا تَقْدِيرًا ﴿١٦﴾

१६) शिशा पनि चाँदीको हुनेछन् । जसलाई ठीक-ठीक मात्रानुसार बनाएको हुनेछ ।

وَيُسْقَوْنَ فِيهَا كَأْسًا كَانَ مِزَاجُهَا زَنجَبِيلًا ﴿١٧﴾

१७) र त्यहाँ उनीहरूलाई यस्तो पेय पिलाइनेछ जसमा सुठोको (जन्जबील) मिसावट हुनेछ ।

عَيْنًا فِيهَا تُسَمَّىٰ سَلْسَبِيلًا ﴿١٨﴾

१८) यो स्वर्गको एउटा नहरबाट जसको नाम “सलसबील” छ ।

وَيَطُوفُ عَلَيْهِمْ وِلْدَانٌ مُّخَلَّدُونَ إِذَا رَأَيْتَهُمْ حَسِبْتَهُمْ لُؤْلُؤًا مَّنثُورًا ﴿١٩﴾

१९) र उनीहरूको आस पासमा स-साना केटाहरूले ओहोरदोहोर गर्नेछन् जो सदैव किशोर अवस्थामा रहनेछन् । जब तिमीहरूले उनीहरूलाई देख्दछौ तब ठान्नेछौ कि तिनीहरू छरिएका सच्चा मोती हुन् ।

وَإِذَا رَأَيْتَ ثَمَّ رَأَيْتَ نَعِيمًا وَمُلْكًا كَبِيرًا ﴿٢٠﴾

२०) स्वर्गमा तिमी जहाँ देख्नेछौ, ठूलो अनुकम्पा र विशाल साम्राज्य देख्नेछौ ।

عَالِيَهُمْ ثِيَابُ سُندُسٍ خُضْرٌ وَإِسْتَبْرَقٌ وَحُلُّوٓا۟ أَسَاوِرَ مِن فِضَّةٍ وَسَقَىٰهُمْ رَبُّهُمْ شَرَابًا طَهُورًا ﴿٢١﴾

२१) उनीहरूको शरीरमा मसिनो हरियो रेश्मी वस्त्र र बाक्लो बुट्टेदार रेश्मी वस्त्र हुनेछ, र उनीहरूलाई चाँदीको कंगन पहिऱ्याइने छ र उनको पालनकर्ताले उनीलाई पवित्र पेय पिलाउनेछ ।

إِنَّ هَٰذَا كَانَ لَكُمْ جَزَآءً وَكَانَ سَعْيُكُم مَّشْكُورًا ﴿٢٢﴾

२२) यो तिम्रै कर्मको पुरस्कार हो र तिम्रो प्रयासको सम्मान गरियो ।

إِنَّا نَحْنُ نَزَّلْنَا عَلَيْكَ ٱلْقُرْءَانَ تَنزِيلًا ﴿٢٣﴾

२३) निश्चय नै हामीले अत्यन्त व्यवस्थित रूपले तपाईमाथि कुरआन अवतरित गरेका छौं ।

فَاصْبِرْ لِحُكْمِ رَبِّكَ وَلَا تُطِعْ مِنْهُمْ آثِمًا أَوْ كَفُورًا ﴿٢٤﴾

२४) अतः आफ्नो पालनकर्ताको आदेश र निर्णय अनुसार धैर्यले काम गर्नु र उनीहरूमध्ये कुनै गुनाहगार वा कृतघ्नको आज्ञापालन नगर्नु ।

وَاذْكُرِ اسْمَ رَبِّكَ بُكْرَةً وَأَصِيلًا ﴿٢٥﴾

२५) र प्रातःकाल र सन्ध्याकालको समयमा आफ्नो पालनकर्ताको नामको स्मरण गर्नु ।

وَمِنَ اللَّيْلِ فَاسْجُدْ لَهُ وَسَبِّحْهُ لَيْلًا طَوِيلًا ﴿٢٦﴾

२६) र रातीको समयमा उसलाई सज्दा (ढोग्ने) गर, र अबेर रातीसम्म उसको गुणगान गर्नेगर ।

إِنَّ هَٰؤُلَاءِ يُحِبُّونَ الْعَاجِلَةَ وَيَذَرُونَ وَرَاءَهُمْ يَوْمًا ثَقِيلًا ﴿٢٧﴾

२७) निःसन्देह यिनीहरूले छिटै प्राप्त हुने संसार चाहन्छन् र (कयामतका) ठूलो दिनलाई पछाडि छोडिदिन्छन् ।

نَحْنُ خَلَقْنَاهُمْ وَشَدَدْنَا أَسْرَهُمْ ۖ وَإِذَا شِئْنَا بَدَّلْنَا أَمْثَالَهُمْ تَبْدِيلًا ﴿٢٨﴾

२८) हामीले उनीहरूलाई सृष्टि गर्‍यौं र हामीले नै उनका जोर्नी र गाँठोहरूलाई बलियो बनायौं र हामीले जतिखेर चाहन्छौं उनी जस्तालाई पूर्णतः परिवर्तन गरिदिन्छौं ।

إِنَّ هَٰذِهِ تَذْكِرَةٌ ۖ فَمَنْ شَاءَ اتَّخَذَ إِلَىٰ رَبِّهِ سَبِيلًا ﴿٢٩﴾

२९) निश्चय नै यो एउटा उपदेश हो, अब जसले चाहन्छ आफ्नो पालनकर्ताको मार्ग ग्रहण गर्न सक्छ ।

وَمَا تَشَاءُونَ إِلَّا أَنْ يَشَاءَ اللَّهُ ۚ إِنَّ اللَّهَ كَانَ عَلِيمًا حَكِيمًا ﴿٣٠﴾

३०) र तिमीले चाहन सक्दैनौ, तर जुन अल्लाहले चाहन्छ निसन्देह अल्लाह सर्वज्ञ र तत्वदर्शी छ,

يُدْخِلُ مَنْ يَشَاءُ فِي رَحْمَتِهِ ۚ وَالظَّالِمِينَ أَعَدَّ لَهُمْ عَذَابًا أَلِيمًا ﴿٣١﴾

३१) जसलाई चाहन्छ आफ्नो दयालुतामा प्रवेश गराउँछ र अत्याचारीहरूको निम्ति उसले दुःखद यातना तयार गरेको छ ।

## सूरतुल् मुर्सलात-७७




सूरतुल् मुर्सलात मक्की हो, यसमा ५० आयतहरू र २ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) हृदय प्रसन्न गर्दै बग्ने वायुको कसम । — وَالْمُرْسَلٰتِ عُرْفًا ۝١

२) अनि अत्यन्त प्रचण्ड भइहाल्ने (हवा)को कसम । — فَالْعٰصِفٰتِ عَصْفًا ۝٢

३) र (बादलहरूलाई) उचालेर फिजाउँछन् त्यसको सौगन्ध । — وَّالنّٰشِرٰتِ نَشْرًا ۝٣

४) फेरि सत्य र असत्यलाई अलग-अलग टुक्रा-टुक्रा गरिदिने, — فَالْفٰرِقٰتِ فَرْقًا ۝٤

५) र वह्य ल्याउने फरिश्ताहरूको कसम । — فَالْمُلْقِيٰتِ ذِكْرًا ۝٥

६) जुन वहय दोष उतार्ने वा सावधान गर्नको निम्ति हुन्छ । — عُذْرًا اَوْ نُذْرًا ۝٦

७) जुन कुराको तिमीलाई वचन दिइन्छ त्यो निश्चय नै पूरा हुनेवाला छ । — اِنَّمَا تُوْعَدُوْنَ لَوَاقِعٌ ۝٧

८) अतः जब ताराहरूलाई प्रकाशहीन गरिदिइनेछ । — فَاِذَا النُّجُوْمُ طُمِسَتْ ۝٨

९) र जब आकाश क्षतविक्षत गरिदिइनेछ । — وَاِذَا السَّمَآءُ فُرِجَتْ ۝٩

१०) र जब पर्वतहरू टुक्रा-टुक्रा गरी उडाइदिइने छन् । — وَاِذَا الْجِبَالُ نُسِفَتْ ۝١٠

११) र जब रसूलहरूलाई निर्धारित समयमा ल्याइनेछ । — وَاِذَا الرُّسُلُ اُقِّتَتْ ۝١١

| | |
|---|---|
| १२) कुन दिनको निम्ति (यी सबैलाई) स्थगित गरिएको छ ? | لِاَيِّ يَوۡمٍ اُجِّلَتۡ ؕ﴿۱۲﴾ |
| १३) फैसलाको दिनको निम्ति । | لِيَوۡمِ الۡفَصۡلِ ۚ﴿۱۳﴾ |
| १४) र तिमीलाई के थाहा कि फैसलाको दिन के हो ? | وَ مَاۤ اَدۡرٰىكَ مَا يَوۡمُ الۡفَصۡلِ ؕ﴿۱۴﴾ |
| १५) बर्बादी हुन्छ त्यस दिन असत्य ठहराउनेहरूको निम्ति । | وَيۡلٌ يَّوۡمَئِذٍ لِّلۡمُكَذِّبِيۡنَ ﴿۱۵﴾ |
| १६) के हामीले पहिलाका मानिसहरूलाई नष्ट गरेनौं ? | اَلَمۡ نُهۡلِكِ الۡاَوَّلِيۡنَ ؕ﴿۱۶﴾ |
| १७) अनि हामीले उनीहरूको पछि पछिकालाई ल्यायौं । | ثُمَّ نُتۡبِعُهُمُ الۡاٰخِرِيۡنَ ﴿۱۷﴾ |
| १८) हामीले अपराधीहरूसित यस्तै गर्दछौं । | كَذٰلِكَ نَفۡعَلُ بِالۡمُجۡرِمِيۡنَ ﴿۱۸﴾ |
| १९) त्यो दिन असत्य ठहराउनेहरूको निम्ति अफसोच छ । | وَيۡلٌ يَّوۡمَئِذٍ لِّلۡمُكَذِّبِيۡنَ ﴿۱۹﴾ |
| २०) के हामीले तिमीलाई तुच्छ जल( वीर्य) बाट सृष्टि गरेनौं ? | اَلَمۡ نَخۡلُقۡكُّمۡ مِّنۡ مَّآءٍ مَّهِيۡنٍ ۙ﴿۲۰﴾ |
| २१) अनि हामीले त्यसलाई बलियो र सुरक्षित ठाउँमा राख्यौं । | فَجَعَلۡنٰهُ فِىۡ قَرَارٍ مَّكِيۡنٍ ۙ﴿۲۱﴾ |
| २२) एउटा निश्चित समय सम्म । | اِلٰى قَدَرٍ مَّعۡلُوۡمٍ ۙ﴿۲۲﴾ |
| २३) फेरि हामीले अनुमान गर्‍यौं र हामी सर्वोत्तम अनुमान गर्नेवाला हौं । | فَقَدَرۡنَا ۖ فَنِعۡمَ الۡقٰدِرُوۡنَ ﴿۲۳﴾ |
| २४) विनाश छ त्यस दिन असत्य ठहर्‍याउनेहरूका निम्ति । | وَيۡلٌ يَّوۡمَئِذٍ لِّلۡمُكَذِّبِيۡنَ ﴿۲۴﴾ |
| २५) के हामीले धरतीलाई समेटिनेवाला बनाएनौं ? | اَلَمۡ نَجۡعَلِ الۡاَرۡضَ كِفَاتًا ۙ﴿۲۵﴾ |
| २६) जीवितलाई र मृतहरूलाई पनि । | اَحۡيَآءً وَّ اَمۡوَاتًا ۙ﴿۲۶﴾ |

२७) र त्यसमाथि हामीले अग्ला-अग्ला पर्वतहरू स्थापित गर्‍यौं । र तिमीहरूलाई संतुष्ट गर्ने मीठो पानी पिलायौं,

وَجَعَلْنَا فِيهَا رَوَاسِيَ شَامِخَاتٍ وَأَسْقَيْنَاكُم مَّاءً فُرَاتًا ﴿٢٧﴾

२८) त्यस दिन असत्य ठहर्‍याउनेहरूका निम्ति खराबी (विनाश) छ ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٢٨﴾

२९) जुन कुरोलाई तिमीले असत्य ठहर्‍याउँथ्यौ सोही नर्कतिर हिंड,

انطَلِقُوا إِلَىٰ مَا كُنتُم بِهِ تُكَذِّبُونَ ﴿٢٩﴾

३०) त्यस छायाँतिर हिंड जसका तीनवटा हाँगाहरू छन्,

انطَلِقُوا إِلَىٰ ظِلٍّ ذِي ثَلَاثِ شُعَبٍ ﴿٣٠﴾

३१) जो वास्तवमा न छायाँ दिन्छ, न त रापबाट सुरक्षा ।

لَّا ظَلِيلٍ وَلَا يُغْنِي مِنَ اللَّهَبِ ﴿٣١﴾

३२) निःसन्देह नर्क आगोको झिल्का फ्याक्दछ जुन(ठूलो) किल्ला जस्ता हुन्छन् ।

إِنَّهَا تَرْمِي بِشَرَرٍ كَالْقَصْرِ ﴿٣٢﴾

३३) त्यो पहेलो रंगका ऊँटहरू जस्तो लाग्छ ।

كَأَنَّهُ جِمَالَتٌ صُفْرٌ ﴿٣٣﴾

३४) आज असत्य ठहर्‍याउनेहरूका निम्ति दुर्गति छ ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٣٤﴾

३५) आजको दिन त्यो दिन हो कि यिनीहरू बोल्न पनि सक्दैनन् ।

هَٰذَا يَوْمُ لَا يَنطِقُونَ ﴿٣٥﴾

३६) नत उनलाई गलती स्वीकार गरी क्षमायाचना गर्न अनुमति दिइनेछ ।

وَلَا يُؤْذَنُ لَهُمْ فَيَعْتَذِرُونَ ﴿٣٦﴾

३७) त्यस दिन असत्य ठहर्‍याउनेहरूका निम्ति खराबी छ ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٣٧﴾

३८) यो फैसलाको दिन हो, (जसमा) हामीले तिमीलाई र पहिलाका

هَٰذَا يَوْمُ الْفَصْلِ ۖ جَمَعْنَاكُمْ وَالْأَوَّلِينَ ﴿٣٨﴾

मानिसहरूलाई एकत्रित गरेका छौं ।

فَإِن كَانَ لَكُمْ كَيْدٌ فَكِيدُونِ ﴿٣٩﴾

३९) तसर्थ यदि तिमी मसँग कुनै चाल चल्न सक्छौ भने चलिहाल ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٤٠﴾

४०) त्यस दिन असत्य ठहऱ्याउनेहरूका निम्ति अफसोच छ ।

إِنَّ الْمُتَّقِينَ فِي ظِلَالٍ وَعُيُونٍ ﴿٤١﴾

४१) निश्चय नै संयमीहरू छायाँ र भरनाहरूमा हुनेछन् ।

وَفَوَاكِهَ مِمَّا يَشْتَهُونَ ﴿٤٢﴾

४२) र ती फलहरूको बीचमा जुन उनीहरूले रुचाउँछन् ।

كُلُوا وَاشْرَبُوا هَنِيئًا بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿٤٣﴾

४३) (हे स्वर्गबासीहरू) जुन कर्म तिमीले गर्दै थियौ, त्यसको प्रतिफल स्वरूप आनन्दसित खाऊ र पिऊ ।

إِنَّا كَذَٰلِكَ نَجْزِي الْمُحْسِنِينَ ﴿٤٤﴾

४४) हामीले भलाई गर्नेवालाहरूका निम्ति यस्तै प्रतिफल दिने गर्दछौं ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٤٥﴾

४५) यो दिन सत्य नठहऱ्याउनेहरूको निम्ति विनाश छ ।

كُلُوا وَتَمَتَّعُوا قَلِيلًا إِنَّكُم مُّجْرِمُونَ ﴿٤٦﴾

४६) (हे नास्तिकहरू) तिमी अलि खाइहाल र आनन्द गरिहाल, वास्तवमा तिमी अपराधी हौ ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٤٧﴾

४७) त्यस दिन असत्य ठहऱ्याउनेहरूको निम्ति ठूलो विनाश छ ।

وَإِذَا قِيلَ لَهُمُ ارْكَعُوا لَا يَرْكَعُونَ ﴿٤٨﴾

४८) जब उनीसित भनिन्छ कि (अल्लाहको अगाडि) नतमस्तक होऊ, त हुँदैनन् ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٤٩﴾

४९) त्यस दिन असत्य ठहऱ्याउनेहरूका निम्ति बर्बादी छ ।

فَبِأَيِّ حَدِيثٍ بَعْدَهُ يُؤْمِنُونَ ﴿٥٠﴾

५०) अब यस कुरआन पश्चात उनीहरूले कुन कुरोमा ईमान ल्याउनेछन्?

## सूरतुन् नबा-७८




सूरतुन् नबा मक्की हो, यसमा ४० आयतहरू र २ रुकूअ्हरू छन् ।

| | |
|---|---|
| शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ । | بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ |
| १) (यी) मानिसहरूले कुन कुराको बारेमा सोधपूछ गरिराखेका छन् ? | عَمَّ يَتَسَآءَلُوْنَ ۝١ |
| २) (के) त्यस ठूलो समाचारको बारेमा ? | عَنِ النَّبَاِ الْعَظِيْمِ ۝٢ |
| ३) जसमा यिनीहरूले मतभेद गरिराखेका छन्, | الَّذِيْ هُمْ فِيْهِ مُخْتَلِفُوْنَ ۝٣ |
| ४) हेर, यिनीहरूले शीघ्र नै थाहापाउने छन् । | كَلَّا سَيَعْلَمُوْنَ ۝٤ |
| ५) अनि यकीनका साथ यिनीहरूले शीघ्र नै थाहा पाउने छन् । | ثُمَّ كَلَّا سَيَعْلَمُوْنَ ۝٥ |
| ६) के हामीले धरतीलाई ओछ्यान बनाएनौं ? | اَلَمْ نَجْعَلِ الْاَرْضَ مِهٰدًا ۝٦ |
| ७) र पहाडहरूलाई मेख खम्बा ? | وَّالْجِبَالَ اَوْتَادًا ۝٧ |
| ८) र हामीले तिमीलाई जोडी-जोडी सृष्टि गर्‍यौं । | وَّخَلَقْنٰكُمْ اَزْوَاجًا ۝٨ |
| ९) र हामीले तिम्रा निद्रालाई आरामको माध्यम बनायौं । | وَّجَعَلْنَا نَوْمَكُمْ سُبَاتًا ۝٩ |
| १०) र रातलाई पर्दा बनायौं । | وَّجَعَلْنَا الَّيْلَ لِبَاسًا ۝١٠ |
| ११) र दिनलाई जीविकोपार्जनको समय बनायौं । | وَّجَعَلْنَا النَّهَارَ مَعَاشًا ۝١١ |
| १२) र तिमीमाथि हामीले सातवटा सुदृढ आकाश निर्मित गर्‍यौं, | وَبَنَيْنَا فَوْقَكُمْ سَبْعًا شِدَادًا ۝١٢ |

وَّجَعَلْنَا سِرَاجًا وَّهَّاجًا ﴿١٣﴾

१३) र एक चम्किलो प्रकाशमान सूर्य बनायौं ।

وَّاَنْزَلْنَا مِنَ الْمُعْصِرٰتِ مَآءً ثَجَّاجًا ﴿١٤﴾

१४) र बादलहरूबाट हामीले पानीको बृष्टि गरायौं ।

لِّنُخْرِجَ بِهٖ حَبًّا وَّنَبَاتًا ﴿١٥﴾

१५) ताकि त्यसबाट अन्न र सब्जी उत्पन्न गरौं,

وَّجَنّٰتٍ اَلْفَافًا ﴿١٦﴾

१६) र बाक्ला घना बगैंचाहरू,

اِنَّ يَوْمَ الْفَصْلِ كَانَ مِيْقَاتًا ﴿١٧﴾

१७) निःसन्देह फैसलाको दिन निश्चित छ,

يَّوْمَ يُنْفَخُ فِى الصُّوْرِ فَتَاْتُوْنَ اَفْوَاجًا ﴿١٨﴾

१८) जुन दिन सूरमा फूँकिनेछ, अनि तिमीहरू समूह-समूहमा आई उपस्थित हुनेछौ ।

وَّفُتِحَتِ السَّمَآءُ فَكَانَتْ اَبْوَابًا ﴿١٩﴾

१९) र आकाश खोलिनेछ, (त्यसमा) ढोकैढोका हुनेछ ।

وَّسُيِّرَتِ الْجِبَالُ فَكَانَتْ سَرَابًا ﴿٢٠﴾

२०) र पहाड चलाइनेछन्, तब तिनीहरू रेत भइहाल्नेछन् ।

اِنَّ جَهَنَّمَ كَانَتْ مِرْصَادًا ﴿٢١﴾

२१) निःसंदेह जहन्नम घातमा छ ।

لِّلطّٰغِيْنَ مَاٰبًا ﴿٢٢﴾

२२) अर्थात् उल्लंघनकारीहरूको बासस्थान हो ।

لّٰبِثِيْنَ فِيْهَآ اَحْقَابًا ﴿٢٣﴾

२३) त्यसमा तिनीहरू वर्षौं वर्षसम्म रहनेछन् ।

لَا يَذُوْقُوْنَ فِيْهَا بَرْدًا وَّلَا شَرَابًا ﴿٢٤﴾

२४) उनीहरू न त्यसमा शीतलताको स्वाद चाख्नेछन् र न कुनै पेयको ।

اِلَّا حَمِيْمًا وَّغَسَّاقًا ﴿٢٥﴾

२५) उम्लिराखेको पानी र बगिराखेका पीप मात्र हुनेछ ।

جَزَآءً وِّفَاقًا ﴿٢٦﴾

२६) उनीहरूले पूरा-पूर प्रतिफल पाउने छन् ।

२७) उनीहरूलाई त हिसाबको आशा नै थिएन ।

إِنَّهُمْ كَانُوا لَا يَرْجُونَ حِسَابًا ﴿٢٧﴾

२८) र निडर भएर उनीहरूले हाम्रा आयतहरूको उपहास गर्दथे ।

وَكَذَّبُوا بِآيَاتِنَا كِذَّابًا ﴿٢٨﴾

२९) हामीले प्रत्येक कुरालाई लेखेर गन्तीमा राखेका छौं ।

وَكُلَّ شَيْءٍ أَحْصَيْنَاهُ كِتَابًا ﴿٢٩﴾

३०) तसर्थ (अब) तिमीले आफ्नो कर्मको स्वाद चाख । हामीले तिमीमाथि यातनाको वृद्धि गर्दै जानेछौं ।

فَذُوقُوا فَلَنْ نَزِيدَكُمْ إِلَّا عَذَابًا ﴿٣٠﴾

३१) निःसन्देह संयमीहरूको निम्ति ठूलो सफलता छ ।

إِنَّ لِلْمُتَّقِينَ مَفَازًا ﴿٣١﴾

३२) बगैचाहरू छन्, र अँगूरहरू छन् ।

حَدَائِقَ وَأَعْنَابًا ﴿٣٢﴾

३३) नौयवना कुमारी युवतीहरू छिन् ।

وَكَوَاعِبَ أَتْرَابًا ﴿٣٣﴾

३४) र शराबका टना टन्न भरिएका गिलासहरू ।

وَكَأْسًا دِهَاقًا ﴿٣٤﴾

३५) उनीहरूले त्यहाँ न त कुनै व्यर्थका कुरा सुन्नेछन्, नत झूठ कुरो सुन्ने छन् ।

لَا يَسْمَعُونَ فِيهَا لَغْوًا وَلَا كِذَّابًا ﴿٣٥﴾

३६) (यिनलाई) तिम्रो पालनकर्ताको तर्फबाट (उनीहरूको राम्रो) कर्मको प्रतिफल हुनेछ,

جَزَاءً مِنْ رَبِّكَ عَطَاءً حِسَابًا ﴿٣٦﴾

३७) उसको तर्फबाट जो आकाशहरू र पृथ्वीको र तिनको बीचमा जे छ त्यसको पालनकर्ता हो । र धेरै कृपाशील छ । कसैलाई उनीसित कुराकानी गर्ने अधिकार छैन ।

رَبِّ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا الرَّحْمَٰنِ لَا يَمْلِكُونَ مِنْهُ خِطَابًا ﴿٣٧﴾

३८) जुन दिन आत्मा र फरिश्ताहरू पक्तिबद्ध भएर उभिनेछन् तर कोही कुरो गर्न सक्दैन परन्तु जसलाई अललाहले आज्ञा दिन्छ र उसले ठीक कुरो मुखबाट निकाल्नेछ ।

يَوْمَ يَقُومُ الرُّوحُ وَالْمَلَٰٓئِكَةُ صَفًّا ۖ لَّا يَتَكَلَّمُونَ إِلَّا مَنْ أَذِنَ لَهُ الرَّحْمَٰنُ وَقَالَ صَوَابًا ﴿٣٨﴾

३९) त्यो दिन सत्य (सुनिश्चित) छ । अब जसले चाहन्छ (सत्य कर्म गरेर) आफ्नो पालनकर्ता कहाँ राम्रो ठेगाना बनाओस् ।

ذَٰلِكَ الْيَوْمُ الْحَقُّ ۖ فَمَن شَآءَ اتَّخَذَ إِلَىٰ رَبِّهِۦ مَـَٔابًا ﴿٣٩﴾

४०) हामीले तिमीसित छिटै आउने वाला सजायबाट डरायौं । जुनदिन मान्छे आफूले गरेको कमाई देख्नेछ र काफिर भन्ने छन् कि काश हामी माटो भइहालेको भए ।

إِنَّآ أَنذَرْنَٰكُمْ عَذَابًا قَرِيبًا يَوْمَ يَنظُرُ الْمَرْءُ مَا قَدَّمَتْ يَدَاهُ وَيَقُولُ الْكَافِرُ يَٰلَيْتَنِى كُنتُ تُرَٰبًۢا ﴿٤٠﴾



# सूरतुन् नाज़िआत-७९




सूरतुन् नाज़िआत मक्की हो, यसमा ४६ आयतहरू र २ रुकूअ् छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

وَالنّٰزِعٰتِ غَرْقًا ۝١

१) डुबेर शक्तिले तान्नेहरूको क़सम ।

وَّالنّٰشِطٰتِ نَشْطًا ۝٢

२) गाँठोलाई खोलेर छुटाइदिने वालाहरूको क़सम ।

وَّالسّٰبِحٰتِ سَبْحًا ۝٣

३) र तैर्ने फिर्ने वालाहरूको सौगन्ध ।

فَالسّٰبِقٰتِ سَبْقًا ۝٤

४) फेरि दगुरेर अगाडि हिड्ने वालाहरूको सौगन्ध ।

فَالْمُدَبِّرٰتِ اَمْرًا ۝٥

५) फेरि काम सम्पन्न गर्न उपाय गर्ने वालाहरूको सौगन्ध ।

يَوْمَ تَرْجُفُ الرَّاجِفَةُ ۝٦

६) जुन दिन काम्ने वाली कम्ने छिन ।

تَتْبَعُهَا الرَّادِفَةُ ۝٧

७) त्यसको पछि-पछि पछाडि आउनेवाली आउने छिन् ।

قُلُوْبٌ يَّوْمَئِذٍ وَّاجِفَةٌ ۝٨

८) धेरै मुटुहरू त्यस दिन ढुकुढुक गर्ने छन् ।

اَبْصَارُهَا خَاشِعَةٌ ۝٩

९) जसको दृष्टि तल हुनेछिन् ।

يَقُوْلُوْنَ ءَاِنَّا لَمَرْدُوْدُوْنَ فِي الْحَافِرَةِ ۝١٠

१०) भन्छन् कि के हामी पहिलेको अवस्थामा फर्काइने छौं ?

ءَاِذَا كُنَّا عِظَامًا نَّخِرَةً ۝١١

११) के त्यसबेला जब हामी हड्डीमा परिणत भइसक्ने छौं ।

قَالُوْا تِلْكَ اِذًا كَرَّةٌ خَاسِرَةٌ ۝١٢

१२) भन्दछन कि फेरि यो फर्किनु त नोक्सानी दिनेवाला छ ।

| | |
|---|---|
| १३) थाहा हुनु पर्छ त्यो त मात्र एउटा डरलाग्दो डाँट हो । | فَإِنَّمَا هِيَ زَجْرَةٌ وَاحِدَةٌ ﴿١٣﴾ |
| १४) कि जसको प्रकट हुनासाथै तिनीहरू एकदमै मैदानमा एकत्रित हुनेछन् । | فَإِذَا هُم بِالسَّاهِرَةِ ﴿١٤﴾ |
| १५) के "मूसा(अ.)को" सूचना तिमीलाई प्राप्त भएको छ ? | هَلْ أَتَاكَ حَدِيثُ مُوسَىٰ ﴿١٥﴾ |
| १६) जबकि उनीलाई उनका पालनकर्ताले पवित्र मैदान "तोआ" मा बोलायो । | إِذْ نَادَاهُ رَبُّهُ بِالْوَادِ الْمُقَدَّسِ طُوًى ﴿١٦﴾ |
| १७) कि तिमी फिरऔनको समक्ष जाऊ, त्यसले आत्याचार गरी राखेको छ । | اذْهَبْ إِلَىٰ فِرْعَوْنَ إِنَّهُ طَغَىٰ ﴿١٧﴾ |
| १८) उसलाई भनकि के तिमी सुर्धन चाहन्छौ ? | فَقُلْ هَل لَّكَ إِلَىٰ أَن تَزَكَّىٰ ﴿١٨﴾ |
| १९) र यो कि म तेरो पालनकर्ताको बाटो देखाऊँ कि तिमी डरने गर । | وَأَهْدِيَكَ إِلَىٰ رَبِّكَ فَتَخْشَىٰ ﴿١٩﴾ |
| २०) त्यसपछि उनले उसलाई ठूलो निशानी देखाए । | فَأَرَاهُ الْآيَةَ الْكُبْرَىٰ ﴿٢٠﴾ |
| २१) तर उसले झूठो भन्यो र अवज्ञा गऱ्यो । | فَكَذَّبَ وَعَصَىٰ ﴿٢١﴾ |
| २२) अनि दगुर्दै फर्किहाल्यो । | ثُمَّ أَدْبَرَ يَسْعَىٰ ﴿٢٢﴾ |
| २३) फेरि सबलाई एकत्रित गऱ्यो र पुकाऱ्यो । | فَحَشَرَ فَنَادَىٰ ﴿٢٣﴾ |
| २४) अनि भन्यो तिमी सबैको पालनकर्ता म नै हूँ । | فَقَالَ أَنَا رَبُّكُمُ الْأَعْلَىٰ ﴿٢٤﴾ |
| २५) तब(सबभन्दा उच्च) अल्लाहले पनि परलोक र दुनियाँको सजायमा उसलाई समातिहाल्यो । | فَأَخَذَهُ اللَّهُ نَكَالَ الْآخِرَةِ وَالْأُولَىٰ ﴿٢٥﴾ |

२६) जो अल्लाहसित डर मान्छ, उसको निम्ति यसमा पाठ छ ।

إِنَّ فِي ذَٰلِكَ لَعِبْرَةً لِّمَن يَخْشَىٰ ٢٦

२७) तिमीलाई सृष्टि गर्नु धेरै कठिन काम हो कि आकाशलाई ? अल्लाहले(त) उसलाई बनायो ।

ءَأَنتُمْ أَشَدُّ خَلْقًا أَمِ السَّمَاءُ ۚ بَنَاهَا ٢٧

२८) त्यसको छतलाई उच्च बनायो, अनि उसलाई बराबर (ठीक-ठीक) गरिदियो ।

رَفَعَ سَمْكَهَا فَسَوَّاهَا ٢٨

२९) र त्यसको रातीलाई अन्धकारमय बनायो र दिनमा प्रकट गऱ्यो ।

وَأَغْطَشَ لَيْلَهَا وَأَخْرَجَ ضُحَاهَا ٢٩

३०) र यस पश्चात धरतीलाई समथर गरी विस्तारित गरिदियो ।

وَالْأَرْضَ بَعْدَ ذَٰلِكَ دَحَاهَا ٣٠

३१) यसबाट पानी र चारा उमाऱ्यो ।

أَخْرَجَ مِنْهَا مَاءَهَا وَمَرْعَاهَا ٣١

३२) र त्यसमाथि पहाडहरूलाई मजबूतीका साथ स्थापित गरिदियो ।

وَالْجِبَالَ أَرْسَاهَا ٣٢

३३) यी सबै तिम्रो र तिम्रा चौपायाहरूको फाइदाको निम्ति (छन) ।

مَتَاعًا لَّكُمْ وَلِأَنْعَامِكُمْ ٣٣

३४) अनि जब त्यो ठूलो विपदा (कयामत) आउनेछ ।

فَإِذَا جَاءَتِ الطَّامَّةُ الْكُبْرَىٰ ٣٤

३५) जुनदिन मानिस आफूले गरेको कामलाई सम्झनेछ ।

يَوْمَ يَتَذَكَّرُ الْإِنسَانُ مَا سَعَىٰ ٣٥

३६) र सबै देख्नेवालाहरूको सामु नर्क खोलिदिइनेछ ।

وَبُرِّزَتِ الْجَحِيمُ لِمَن يَرَىٰ ٣٦

३७) त जसले अटेरी गऱ्यो ।

فَأَمَّا مَن طَغَىٰ ٣٧

३८) र सांसारिक जीवनलाइ प्राथमिकता दियो ।

وَآثَرَ الْحَيَاةَ الدُّنْيَا ٣٨

فَإِنَّ الْجَحِيمَ هِيَ الْمَأْوَىٰ ﴿٣٩﴾

३९) त उसको ठेगाना नर्क हुने छ ।

وَأَمَّا مَنْ خَافَ مَقَامَ رَبِّهِ وَنَهَى النَّفْسَ عَنِ الْهَوَىٰ ﴿٤٠﴾

४०) र जो आफ्नो पालनकर्ताको सामु उभिनुबाट डरमान्थ्यो र आफ्नो मनलाई नराम्रो इच्छाबाट रोकेको थियो ।

فَإِنَّ الْجَنَّةَ هِيَ الْمَأْوَىٰ ﴿٤١﴾

४१) त त्यसको बासस्थान जन्नत नै हो ।

يَسْأَلُونَكَ عَنِ السَّاعَةِ أَيَّانَ مُرْسَاهَا ﴿٤٢﴾

४२) मानिसहरूले तिमीसित कयामतको बारेमा सोध्छन् कि त्यो कहिले आउँछ ।

فِيمَ أَنْتَ مِنْ ذِكْرَاهَا ﴿٤٣﴾

४३) त्यसको वर्णन सँग तपाईको के सम्बन्ध ?

إِلَىٰ رَبِّكَ مُنْتَهَاهَا ﴿٤٤﴾

४४) त्यो घटित हुने समयको जानकारी त तपाईको पालनकर्तालाई नै छ ।

إِنَّمَا أَنْتَ مُنْذِرُ مَنْ يَخْشَاهَا ﴿٤٥﴾

४५) जो व्यक्ति उसित डर मान्छ तपाई त उसैलाई सावधान गर्नेवाला सम्म हौ ।

كَأَنَّهُمْ يَوْمَ يَرَوْنَهَا لَمْ يَلْبَثُوا إِلَّا عَشِيَّةً أَوْ ضُحَاهَا ﴿٤٦﴾

४६) जब उनीहरूले उसलाई देख्नेछन्, तब यस्तो ठान्नेछन् कि मानौं संसारमा एक साँझ वा एक बिहान सम्म मात्र बसेका थिए ।



# सूरतु अबस-८०



सूरतु अबस मक्की हो, यसमा ४२ आयतहरू र १ रुकूअ् छन्।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ।**

بِسۡمِ اللّٰهِ الرَّحۡمٰنِ الرَّحِیۡمِ

१) उसले रूखापनागरेर मुख फर्कायो।

عَبَسَ وَتَوَلّٰۤی ۙ۝۱

२) किनकि उसको पासमा एउटा अन्धो आयो।

اَنۡ جَآءَهُ الۡاَعۡمٰی ؕ۝۲

३) तिमीलाई के थाह शायद उसको भलो हुने थियो।

وَمَا یُدۡرِیۡكَ لَعَلَّهٗ یَزَّکّٰۤی ۙ۝۳

४) अथवा उपदेश हासिल गर्दथ्यो र उपदेशबाट उसलाई फाइदा हुन्थ्यो।

اَوۡ یَذَّکَّرُ فَتَنۡفَعَهُ الذِّکۡرٰی ؕ۝۴

५) तर जो लापरवाही गर्दछ।

اَمَّا مَنِ اسۡتَغۡنٰی ۙ۝۵

६) उसैको तर्फ तिमी पूरै ध्यान दिन्छौ।

فَاَنۡتَ لَهٗ تَصَدّٰی ؕ۝۶

७) हुनत यदि उसले पवित्रता प्राप्त गरेन भने तिमीलाई कुनै दोष आउँदैन।

وَمَا عَلَیۡكَ اَلَّا یَزَّکّٰی ؕ۝۷

८) र जो तिम्रो पासमा दगुर्दै आयो।

وَاَمَّا مَنۡ جَآءَكَ یَسۡعٰی ۙ۝۸

९) र ऊ (अल्लाहसित) डर्छ पनि।

وَهُوَ یَخۡشٰی ۙ۝۹

१०) उसलाई तिमीले बेवास्ता गर्दछौ।

فَاَنۡتَ عَنۡهُ تَلَهّٰی ۚ۝۱۰

११) हेर यो ठीक होइन कुरआन उपदेशको चीज हो।

کَلَّاۤ اِنَّهَا تَذۡکِرَةٌ ۚ۝۱۱

१२) तसर्थ जसले चाहोस् त्यसबाट उपदेश प्राप्त गरोस्।

فَمَنۡ شَآءَ ذَکَرَهٗ ۘ۝۱۲

१३) यो त पवित्र उच्च पत्तिहरूमा अंकित छ ।

فِيْ صُحُفٍ مُّكَرَّمَةٍ ﴿١٣﴾

१४) जो उच्च ठाउँमा राखिएको र पवित्र छ ।

مَّرْفُوْعَةٍ مُّطَهَّرَةٍ ﴿١٤﴾

१५) यस्ता लेख्नेवालाहरूको हातमा (रहेको) छ ।

بِاَيْدِيْ سَفَرَةٍ ﴿١٥﴾

१६) जो प्रतिष्ठित र पवित्र छन् ।

كِرَامٍ بَرَرَةٍ ﴿١٦﴾

१७) अल्लाहको सजाय, मानिस पनि कति अकृतज्ञ छ ।

قُتِلَ الْاِنْسَانُ مَآ اَكْفَرَهٗ ﴿١٧﴾

१८) अल्लाहले उसलाई कुन कुराबाट सृष्टि गऱ्यो ?

مِنْ اَيِّ شَيْءٍ خَلَقَهٗ ﴿١٨﴾

१९) वीर्यको एउटा थोपाबाट सृष्टि गऱ्यो, अनि त्यसलाई राम्रो अन्दाजमा राख्यो ।

مِنْ نُّطْفَةٍ خَلَقَهٗ فَقَدَّرَهٗ ﴿١٩﴾

२०) र उसको निम्ति मार्ग सरल बनाइदियो ।

ثُمَّ السَّبِيْلَ يَسَّرَهٗ ﴿٢٠﴾

२१) अनि उसलाई मृत्यु प्रदान गऱ्यो अनि कब्रमा पुराइदियो ।

ثُمَّ اَمَاتَهٗ فَاَقْبَرَهٗ ﴿٢١﴾

२२) फेरि जब चाहन्छ (चिहानबाट) उभ्याइदिनेछ,

ثُمَّ اِذَا شَآءَ اَنْشَرَهٗ ﴿٢٢﴾

२३) केही सन्देह छैन कि अल्लाहले त्यसलाई जुन आदेश दियो, त्यसले उसलाई पुरा गरेन ।

كَلَّا لَمَّا يَقْضِ مَآ اَمَرَهٗ ﴿٢٣﴾

२४) अनि मानिसले आफ्नो भोजनलाई हेर्नुपर्छ ।

فَلْيَنْظُرِ الْاِنْسَانُ اِلٰى طَعَامِهٖٓ ﴿٢٤﴾

२५) हामीले नै धेरै पानी वर्षायौं ।

اَنَّا صَبَبْنَا الْمَآءَ صَبًّا ﴿٢٥﴾

| | |
|---|---|
| २६) फेरि हामीले नै धरतीलाई (चिरेर) टुका-टुका पाऱ्यौं । | ثُمَّ شَقَقۡنَا ٱلۡأَرۡضَ شَقّٗا ﴿٢٦﴾ |
| २७) त्यस पश्चात हामीले नै त्यसमा अन्न उब्जायौं । | فَأَنۢبَتۡنَا فِيهَا حَبّٗا ﴿٢٧﴾ |
| २८) र अंगूर र तरकारी । | وَعِنَبٗا وَقَضۡبٗا ﴿٢٨﴾ |
| २९) र जैतून र खजूरहरू । | وَزَيۡتُونٗا وَنَخۡلٗا ﴿٢٩﴾ |
| ३०) र बाक्ला घना बगैंचाहरू । | وَحَدَآئِقَ غُلۡبٗا ﴿٣٠﴾ |
| ३१) र फल र चाराहरू । | وَفَٰكِهَةٗ وَأَبّٗا ﴿٣١﴾ |
| ३२) (यी सबै कुरा) तिम्रा प्रयोग र फाइदाका लागि र तिम्रा चौपायाहरूको निम्ति बनायौं । | مَّتَٰعٗا لَّكُمۡ وَلِأَنۡعَٰمِكُمۡ ﴿٣٢﴾ |
| ३३) तसर्थ जब कानै च्यातिने (कियामतको) प्रचण्ड आवाज आउनेछ । | فَإِذَا جَآءَتِ ٱلصَّآخَّةُ ﴿٣٣﴾ |
| ३४) त्यसदिन मानिस आफ्ना दाजुभाइहरूबाट । | يَوۡمَ يَفِرُّ ٱلۡمَرۡءُ مِنۡ أَخِيهِ ﴿٣٤﴾ |
| ३५) र आफ्नो आमा र बाबुबाट । | وَأُمِّهِۦ وَأَبِيهِ ﴿٣٥﴾ |
| ३६) र आफ्नो श्रीमती र छोराहरूबाट भाग्नेछ । | وَصَٰحِبَتِهِۦ وَبَنِيهِ ﴿٣٦﴾ |
| ३७) यी मध्ये प्रत्येक व्यक्तिलाई त्यसदिन यस्तो चिन्ता हुनेछ जो उसैको लागि प्रयाप्त हुनेछ । | لِكُلِّ ٱمۡرِيٕٖ مِّنۡهُمۡ يَوۡمَئِذٖ شَأۡنٞ يُغۡنِيهِ ﴿٣٧﴾ |
| ३८) कैयन् अनुहारहरू त्यसदिन टल्किरहेका हुनेछन् । | وُجُوهٞ يَوۡمَئِذٖ مُّسۡفِرَةٞ ﴿٣٨﴾ |
| ३९) हाँस्दै खुशी र आनन्दित हुनेछन् । | ضَاحِكَةٞ مُّسۡتَبۡشِرَةٞ ﴿٣٩﴾ |

٤٠) र कैयन् अनुहारहरू त्यस दिन धूल धूसरित हुनेछन् ।

٤١) जसमाथि कालोपना छाएको हुनेछ,

٤٢) यी तिनै काफिर चरित्र दुराचारी मानिसहरू हुनेछन् ।

وَوُجُوهٌ يَوْمَئِذٍ عَلَيْهَا غَبَرَةٌ ﴿٤٠﴾

تَرْهَقُهَا قَتَرَةٌ ﴿٤١﴾

أُولَٰئِكَ هُمُ الْكَفَرَةُ الْفَجَرَةُ ﴿٤٢﴾



## सूरतुत् तक्वीर-८१




सूरतुत् तक्वीर मक्की हो, यसमा २९ आयतहरू र २ रुकूअ् छ ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

| | |
|---|---|
| १) जब सूर्यलाई बेरिहालिनेछ, | إِذَا الشَّمْسُ كُوِّرَتْ ① |
| २) र ताराहरूले आफ्नो चमक गुमाउनेछन् । | وَإِذَا النُّجُومُ انْكَدَرَتْ ② |
| ३) र जब पहाडहरू चलाइनेछन् । | وَإِذَا الْجِبَالُ سُيِّرَتْ ③ |
| ४) र जब १० महिने गर्भवती ऊँटनीहरू भगाई हालिनेछिन् । | وَإِذَا الْعِشَارُ عُطِّلَتْ ④ |
| ५) र जब जंगली जनावरहरू एकत्रित गरिनेछन । | وَإِذَا الْوُحُوشُ حُشِرَتْ ⑤ |
| ६) र जब समुन्द्रहरू उत्तेजित गरिनेछन् । | وَإِذَا الْبِحَارُ سُجِّرَتْ ⑥ |
| ७) जब आत्माहरू (शरीरसँग) मिलाइनेछन् । | وَإِذَا النُّفُوسُ زُوِّجَتْ ⑦ |
| ८) र जब जिउँदै गाडिएको केटीसंग सोधिनेछ, । | وَإِذَا الْمَوْءُودَةُ سُئِلَتْ ⑧ |
| ९) कि कुन गुनाहको कारण उसलाई मारिएको थियो । | بِأَيِّ ذَنْبٍ قُتِلَتْ ⑨ |
| १०) र जब कर्मपत्र खोलिनेछन् । | وَإِذَا الصُّحُفُ نُشِرَتْ ⑩ |
| ११) र जब आकाशको छाला उघारिनेछ । | وَإِذَا السَّمَاءُ كُشِطَتْ ⑪ |
| १२) र जब नर्कको आगो प्रज्जवलित गरिने छ । | وَإِذَا الْجَحِيمُ سُعِّرَتْ ⑫ |

وَإِذَا الْجَنَّةُ أُزْلِفَتْ ﴿١٣﴾

१३) र जब बहिश्त (स्वर्ग) नजीक ल्याइनेछ ।

عَلِمَتْ نَفْسٌ مَّا أَحْضَرَتْ ﴿١٤﴾

१४) तब त्यसदिन हरेक व्यक्तिले थाहा पाइहाल्नेछ कि उसले के लिएर आएको छ ।

فَلَا أُقْسِمُ بِالْخُنَّسِ ﴿١٥﴾

१५) म शपथ लिन्छु ती ताराहरूको जो पछि हटिहाल्छन् ।

الْجَوَارِ الْكُنَّسِ ﴿١٦﴾

१६) र जो घुम्ने र हराइहाल्ने छन् ।

وَاللَّيْلِ إِذَا عَسْعَسَ ﴿١٧﴾

१७) र रातको कसम, जब समाप्त हुनथाल्छ ।

وَالصُّبْحِ إِذَا تَنَفَّسَ ﴿١٨﴾

१८) र प्रातः को कसम जब उदय हुनथाल्छ ।

إِنَّهُ لَقَوْلُ رَسُولٍ كَرِيمٍ ﴿١٩﴾

१९) निश्चय नै यो एक आदरणीय सन्देशवाहकले ल्याएको वाणी हो ।

ذِي قُوَّةٍ عِندَ ذِي الْعَرْشِ مَكِينٍ ﴿٢٠﴾

२०) जो शक्तिवाला छ, सिंहासनको मालिक कहाँ जसको उच्च दर्जा छ ।

مُّطَاعٍ ثَمَّ أَمِينٍ ﴿٢١﴾

२१) जसको आदेश आसमानहरूमा मान्य हुन्छ र जो त्यहाँ विश्वसनीय छ ।

وَمَا صَاحِبُكُم بِمَجْنُونٍ ﴿٢٢﴾

२२) र (मक्काबासीहरू !) तिम्रा साथी दिवाना होइनन् ।

وَلَقَدْ رَآهُ بِالْأُفُقِ الْمُبِينِ ﴿٢٣﴾

२३) उनले यस (फरिश्ता) लाई (आकाशको) खुल्ला (पूर्वी) क्षितिजमा देखेका पनि छन् ।

وَمَا هُوَ عَلَى الْغَيْبِ بِضَنِينٍ ﴿٢٤﴾

२४) उनी परोक्षको कुरा बताउन कञ्जूस्यायी पनि गर्दैनन् ।

وَمَا هُوَ بِقَوْلِ شَيْطَانٍ رَّجِيمٍ ﴿٢٥﴾

२५) र यो कुरआन दुष्ट शैतानको कुरो होइन ।

| | |
|---|---|
| २६) फेरि तिमी कता गइरहेका छौ ? | فَأَيۡنَ تَذۡهَبُونَ ۝٢٦ |
| २७) यो त सम्पूर्ण संसारको लागि मार्ग दर्शन हो । | إِنۡ هُوَ إِلَّا ذِكۡرٞ لِّلۡعَٰلَمِينَ ۝٢٧ |
| २८) खास गरी उसको लागि जो तिमीहरू मध्ये सोझो बाटोमा हिंड्न चाहोस् । | لِمَن شَآءَ مِنكُمۡ أَن يَسۡتَقِيمَ ۝٢٨ |
| २९) र तिमीले विश्वका पालनकर्ताले नचाहिकन केही पनि चाहन सक्दैनौ । | وَمَا تَشَآءُونَ إِلَّآ أَن يَشَآءَ ٱللَّهُ رَبُّ ٱلۡعَٰلَمِينَ ۝٢٩ |



# सूरतुल् इन्फितार-८२




सूरतुल् इन्फ़ितार मक्की हो, यसमा १९ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) जब आकाश छतविछ्त भइहाल्नेछ,

إِذَا السَّمَاءُ انفَطَرَتْ ﴿١﴾

२) र जब ताराहरू झरिहाल्नेछन् ।

وَإِذَا الْكَوَاكِبُ انتَثَرَتْ ﴿٢﴾

३) र जब समुन्द्र बगेर जानेछन् ।

وَإِذَا الْبِحَارُ فُجِّرَتْ ﴿٣﴾

४) र जब चिहानहरू उत्खनित हुनेछन् ।

وَإِذَا الْقُبُورُ بُعْثِرَتْ ﴿٤﴾

५) तब हर व्यक्तिले थाहा पाउने छ कि उसले अगाडि के पठाएको थियो र पछाडि के छोडेको थियो ?

عَلِمَتْ نَفْسٌ مَّا قَدَّمَتْ وَأَخَّرَتْ ﴿٥﴾

६) हे मानव ! कुन कुराले तिमीलाई आफ्नो उदार पालनकर्ताको विषयमा भ्रममा पारेको छ ?

يَا أَيُّهَا الْإِنسَانُ مَا غَرَّكَ بِرَبِّكَ الْكَرِيمِ ﴿٦﴾

७) (त्यही नहो) जसले तिमीलाई सृष्टि गऱ्यो र फेरि (तिम्रा अङ्ग-प्रत्यङ्गहरूलाई) ठीक-ठीक पारी तिमीलाई सन्तुलित बनायो ।

الَّذِي خَلَقَكَ فَسَوَّاكَ فَعَدَلَكَ ﴿٧﴾

८) र जुन रूपमा चाह्यो, तिमीलाई जोडेर तयार गऱ्यो ।

فِي أَيِّ صُورَةٍ مَّا شَاءَ رَكَّبَكَ ﴿٨﴾

९) केही होइन, बरु तिमीले प्रतिफल दिइने दिनलाई झुठ्लाउँछौ ।

كَلَّا بَلْ تُكَذِّبُونَ بِالدِّينِ ﴿٩﴾

१०) जबकि तिमीमाथि निगरानी गर्नेहरू नियुक्त छन् ।

وَإِنَّ عَلَيْكُمْ لَحَافِظِينَ ﴿١٠﴾

كِرَامًا كَاتِبِينَ ﴿١١﴾

११) प्रतिष्ठित लेख्नेहरू नियुक्त छन् ।

يَعْلَمُونَ مَا تَفْعَلُونَ ﴿١٢﴾

१२) तिमीले जे गर्दछौ, (त्यसलाई) उनीहरू जान्दछन् ।

إِنَّ الْأَبْرَارَ لَفِي نَعِيمٍ ﴿١٣﴾

१३) निःसन्देह सत्कर्मी मानिसहरू स्वर्गका ऐशो आराम र अनुग्रहमा हुनेछन् ।

وَإِنَّ الْفُجَّارَ لَفِي جَحِيمٍ ﴿١٤﴾

१४) र निःसंदेह दूराचारीहरू नर्कमा हुनेछन् ।

يَصْلَوْنَهَا يَوْمَ الدِّينِ ﴿١٥﴾

१५) (अर्थात्) प्रतिफलका दिन त्यसमा प्रवेश गर्ने छन् ।

وَمَا هُمْ عَنْهَا بِغَائِبِينَ ﴿١٦﴾

१६) र त्यसबाट उम्केर जान सक्ने छैनन् ।

وَمَا أَدْرَاكَ مَا يَوْمُ الدِّينِ ﴿١٧﴾

१७) र तिमीहरूलाई के थाहा कि प्रतिफलको दिन कस्तो छ ?

ثُمَّ مَا أَدْرَاكَ مَا يَوْمُ الدِّينِ ﴿١٨﴾

१८) म फेरि भन्छु तिमीलाई के थाहा कि प्रतिफलको दिन कस्तो छ ।

يَوْمَ لَا تَمْلِكُ نَفْسٌ لِّنَفْسٍ شَيْئًا ۖ وَالْأَمْرُ يَوْمَئِذٍ لِّلَّهِ ﴿١٩﴾

१९) जुन दिन कुनै व्यक्ति कसैको निम्ति कुनै कुराको अधिकारी हुने छैन, र सबै आदेश त्यस दिन अल्लाह कै हुनेछन् ।



# सूरतुल् मुतफ्फिफीन-८३




सूरतुल् मुतफ़्फ़िफ़ीन मक्की हो, यसमा ३६ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) नाप र तौलमा कमी गर्नेहरूलाई ठूलो खराबी छ । — وَيْلٌ لِّلْمُطَفِّفِيْنَ ①

२) जब मानिसहरूसित नापेर लिन्छन्, त पूरा-पूरा लिन्छन् । — الَّذِيْنَ إِذَا اكْتَالُوْا عَلَى النَّاسِ يَسْتَوْفُوْنَ ②

३) किन्तु जब उनीहरूलाई नापेर वा तौलेर दिन्छन् त घटाएर दिन्छन् । — وَإِذَا كَالُوْهُمْ أَوْ وَّزَنُوْهُمْ يُخْسِرُوْنَ ③

४) के यिनीहरूलाई थाहा छैन कि उनीहरू मरे पछि पक्कै जीवित पारी उठाइनेछन् । — أَلَا يَظُنُّ أُولٰٓئِكَ أَنَّهُمْ مَّبْعُوْثُوْنَ ④

५) (अर्थात्) एउटा ठूलो दिनमा । — لِيَوْمٍ عَظِيْمٍ ⑤

६) जुन दिन सबै मानिसहरू पालनकर्ताको सामुन्ने उभिनेछन् ? — يَّوْمَ يَقُوْمُ النَّاسُ لِرَبِّ الْعٰلَمِيْنَ ⑥

७) नि:सन्देह दुराचारीहरूको किताब (कर्म पत्रहरू) "सिज्जीनमा" छ । — كَلَّآ إِنَّ كِتٰبَ الْفُجَّارِ لَفِيْ سِجِّيْنٍ ⑦

८) र तिमीलाई के थाहा कि सिज्जीन के हो ? — وَمَآ أَدْرٰىكَ مَا سِجِّيْنٌ ⑧

९) यो त लेखिएको पंज्जिका हो । — كِتٰبٌ مَّرْقُوْمٌ ⑨

१०) त्यस दिन झूठा ठहराउनेहरूलाई ठूलो खराबी (धिक्कार) छ । — وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ⑩

११) जसले निसाफको दिनलाई असत्य भन्दथे । — الَّذِيْنَ يُكَذِّبُوْنَ بِيَوْمِ الدِّيْنِ ⑪

وَمَا يُكَذِّبُ بِهِۦٓ إِلَّا كُلُّ مُعْتَدٍ أَثِيمٍ ﴿١٢﴾

१२) र त्यसलाई झूठो उनीहरूले मात्र ठहराउँछन्, जो सीमा-अतिक्रमण गर्नेवाला अपराधी छन् ।

إِذَا تُتْلَىٰ عَلَيْهِ ءَايَٰتُنَا قَالَ أَسَٰطِيرُ ٱلْأَوَّلِينَ ﴿١٣﴾

१३) जब उसलाई हाम्रा आयतहरू सुनाइन्छ त भन्दछ कि यो त पहिलाका मानिसहरूका कथाहरू हुन् ।

كَلَّا ۖ بَلْ ۜ رَانَ عَلَىٰ قُلُوبِهِم مَّا كَانُوا۟ يَكْسِبُونَ ﴿١٤﴾

१४) यो होइन, अपितु जसले नराम्रो कर्महरू गर्दछन्, त्यसकारण उनका हृदयहरूमा खिया लागिसकेको हुन्छ ।

كَلَّآ إِنَّهُمْ عَن رَّبِّهِمْ يَوْمَئِذٍ لَّمَحْجُوبُونَ ﴿١٥﴾

१५) निःसन्देह यिनीहरू त्यस दिन आफ्नो पालनकर्ताको दर्शनबाट वंचित हुन्छन् ।

ثُمَّ إِنَّهُمْ لَصَالُوا۟ ٱلْجَحِيمِ ﴿١٦﴾

१६) फेरि निःसन्देह यिनीहरू नर्कमा प्रवेश गर्नेछन् ।

ثُمَّ يُقَالُ هَٰذَا ٱلَّذِى كُنتُم بِهِۦ تُكَذِّبُونَ ﴿١٧﴾

१७) त्यसपछि (उनीसित) भनिनेछ कि यो त्यही कुरा हो, जसलाई तिमीहरूले असत्य ठहराउन्थ्यौ ।

كَلَّآ إِنَّ كِتَٰبَ ٱلْأَبْرَارِ لَفِى عِلِّيِّينَ ﴿١٨﴾

१८) निःसन्देह सुनिराख कि सत्कर्मीहरूका कर्मपात्र "इल्लीयीनमा" छन् ।

وَمَآ أَدْرَىٰكَ مَا عِلِّيُّونَ ﴿١٩﴾

१९) र तिमीलाई के थाहा कि इल्लीयीन के हो ?

كِتَٰبٌ مَّرْقُومٌ ﴿٢٠﴾

२०) त्यो त लेखिएको किताब हो ।

يَشْهَدُهُ ٱلْمُقَرَّبُونَ ﴿٢١﴾

२१) सामीप्य प्राप्त फरिश्ताहरू त्यसको निरीक्षण गर्दछन् ।

إِنَّ ٱلْأَبْرَارَ لَفِى نَعِيمٍ ﴿٢٢﴾

२२) निःसन्देह भलादमीहरू ठूलो अनुग्रहमा हुनेछन् ।

२३) पलंगहरूमाथि हेरी राखेका मसहरीहरूबाट हेर्नेछन् ।

عَلَى الْأَرَائِكِ يَنْظُرُونَ ﴿٢٣﴾

२४) उनीहरूको अनुहारबाटै तिमीलाई ती अनुग्रहहरूको ताजगी र आभाको बोध भईरहनेछ ।

تَعْرِفُ فِي وُجُوهِهِمْ نَضْرَةَ النَّعِيمِ ﴿٢٤﴾

२५) उनीहरूलाई शीलबन्दी विशुद्ध पेय पिलाइनेछ ।

يُسْقَوْنَ مِنْ رَحِيقٍ مَخْتُومٍ ﴿٢٥﴾

२६) जसको शील कस्तुरी को हुनेछ । तसर्थ अनुकम्पा चाहनेले उसैलाई प्राप्त गर्नुमा पतिस्पर्धा गर्नुपर्छ ।

خِتَامُهُ مِسْكٌ ۚ وَفِي ذَٰلِكَ فَلْيَتَنَافَسِ الْمُتَنَافِسُونَ ﴿٢٦﴾

२७) र यसमा तसनीम (स्वर्गको एउटा छहरा) को पनि मिलावट हुनेछ ।

وَمِزَاجُهُ مِنْ تَسْنِيمٍ ﴿٢٧﴾

२८) त्यो एउटा झरना हो जसको पानी खास खास मानिसहरूले पिउने छन् ।

عَيْنًا يَشْرَبُ بِهَا الْمُقَرَّبُونَ ﴿٢٨﴾

२९) काफिरहरूले संसारमा मोमिनहरूको हाँसो गर्ने गर्दथे ।

إِنَّ الَّذِينَ أَجْرَمُوا كَانُوا مِنَ الَّذِينَ آمَنُوا يَضْحَكُونَ ﴿٢٩﴾

३०) र उनको पासबाट आवत जावत गर्दा त आँखाबाट संकेत गर्दथे ।

وَإِذَا مَرُّوا بِهِمْ يَتَغَامَزُونَ ﴿٣٠﴾

३१) र जब आफ्नो घरतिर फर्कन्थे त ठट्टा गर्ने गर्दथे ।

وَإِذَا انْقَلَبُوا إِلَىٰ أَهْلِهِمُ انْقَلَبُوا فَكِهِينَ ﴿٣١﴾

३२) र जब ती (मोमिनहरूलाई) देख्दथे त भन्दथे कि यिनीहरू पक्कै मार्गविचलित छन्,

وَإِذَا رَأَوْهُمْ قَالُوا إِنَّ هَٰؤُلَاءِ لَضَالُّونَ ﴿٣٢﴾

३३) जबकि उनीहरूलाई यिनीहरू माथि निरीक्षक बनाएर पठाइएको थिएन ।

وَمَا أُرْسِلُوا عَلَيْهِمْ حَافِظِينَ ﴿٣٣﴾

فَالْيَوْمَ الَّذِينَ آمَنُوا مِنَ الْكُفَّارِ يَضْحَكُونَ ﴿٣٤﴾

३४) तसर्थ आज मोमिनहरूले ती काफिरहरू माथि हाँसो गर्नेछन् ।

عَلَى الْأَرَائِكِ يَنظُرُونَ ﴿٣٥﴾

३५) मसनदहरूमाथि (बसी उनीहरूको अवस्था) देखिराखेका हुनेछन् ।

هَلْ ثُوِّبَ الْكُفَّارُ مَا كَانُوا يَفْعَلُونَ ﴿٣٦﴾

३६) अतः काफिरहरूलाई उनीहरूका कर्महरूको (पूरा-पूरा) प्रतिफल प्राप्त भइहाल्यो ।



# सूरतुल् इन्शिक़ाक़्-८४




सूरतुल् इन्शिक़ाक़ मक्की हो, यसमा २५ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

| | |
|---|---|
| १) जब आकाश छिया-छिया परिहाल्नेछ । | إِذَا السَّمَآءُ انْشَقَّتْ ﴿١﴾ |
| २) र आफ्ना पालनकर्ताको आदेशको पालना गर्ने छ र उसलाई पनि यही चाहियो । | وَأَذِنَتْ لِرَبِّهَا وَحُقَّتْ ﴿٢﴾ |
| ३) र जब धरतीलाई समतल पारिदिइनेछ । | وَإِذَا الْأَرْضُ مُدَّتْ ﴿٣﴾ |
| ४) र जे-जति त्यसमा छ, त्यसलाई बाहिर फ्याँकिदिनेछ र (बिल्कुलै) रित्तो भइहाल्नेछ । | وَأَلْقَتْ مَا فِيهَا وَتَخَلَّتْ ﴿٤﴾ |
| ५) र आफ्नो पालकर्ताको आदेश पालना गर्नेछ। र उसलाई उचित पनि यही छ । | وَأَذِنَتْ لِرَبِّهَا وَحُقَّتْ ﴿٥﴾ |
| ६) हे मानिस ! तिमी आफ्नो पालनकर्तासित भेट्दा सम्म कोशिश र अनेक काम गरेर उसित भेट गर्नेवाला छौ । | يَا أَيُّهَا الْإِنْسَانُ إِنَّكَ كَادِحٌ إِلَىٰ رَبِّكَ كَدْحًا فَمُلَاقِيهِ ﴿٦﴾ |
| ७) अनि जुन सुकैलाई उसको कर्मपत्र उसको दाहिने हातमा दिइने छ । | فَأَمَّا مَنْ أُوتِيَ كِتَابَهُ بِيَمِينِهِ ﴿٧﴾ |
| ८) त ऊसित सरलताका साथ हिसाब लिइनेछ । | فَسَوْفَ يُحَاسَبُ حِسَابًا يَسِيرًا ﴿٨﴾ |
| ९) र त्यो आफ्ना आफन्तहरूतिर खुशी भएर फर्कनेछ । | وَيَنْقَلِبُ إِلَىٰ أَهْلِهِ مَسْرُورًا ﴿٩﴾ |

وَاَمَّا مَنْ اُوْتِيَ كِتٰبَهٗ وَرَآءَ ظَهْرِهٖ ۝١٠

१०) र त्यो व्यक्ति जसको कर्मपत्र उसको पिठ्यूको पछाडिबाट दिइनेछ ।

فَسَوْفَ يَدْعُوْا ثُبُوْرًا ۝١١

११) त त्यसले मृत्युलाई पुकार्नेछ ।

وَّيَصْلٰى سَعِيْرًا ۝١٢

१२) र प्रज्वलित नर्कमा (दोजखमा) प्रवेश गर्नेछ ।

اِنَّهٗ كَانَ فِيْٓ اَهْلِهٖ مَسْرُوْرًا ۝١٣

१३) त्यो मानिस आफ्ना आफन्तका मानिसहरूमा मग्न रहन्थ्यो ।

اِنَّهٗ ظَنَّ اَنْ لَّنْ يَّحُوْرَ ۝١٤

१४) र ठानी राख्थ्यो कि अल्लाहतिर फर्केर जाने छैन ।

بَلٰٓى ۚ اِنَّ رَبَّهٗ كَانَ بِهٖ بَصِيْرًا ۝١٥

१५) हो, किन होइन ? यद्यपि उसको पालनकर्ताले उसलाई हेरिराखेको थियो ।

فَلَآ اُقْسِمُ بِالشَّفَقِ ۝١٦

१६) मलाई कसम छ डुब्ने बेलाको प्रकाशको ।

وَالَّيْلِ وَمَا وَسَقَ ۝١٧

१७) र रात्रीको कसम र उसद्वारा एकत्रित गरिएका वस्तुहरूको कसम ।

وَالْقَمَرِ اِذَا اتَّسَقَ ۝١٨

१८) र चन्द्रको, जबकि त्यो पूर्ण भइहाल्छ ।

لَتَرْكَبُنَّ طَبَقًا عَنْ طَبَقٍ ۝١٩

१९) कि तिमीले निश्चय नै एक अवस्थाबाट अर्को अवस्था सम्म पुग्ने छौ ।

فَمَا لَهُمْ لَا يُؤْمِنُوْنَ ۝٢٠

२०) त उनीहरूलाई के भएको छ कि ईमान ल्याउँदैनन् ।

وَاِذَا قُرِئَ عَلَيْهِمُ الْقُرْاٰنُ لَا يَسْجُدُوْنَ ۝٢١

२१) र जब उनीहरूको अगाडि कुरआन पढिन्छ त ढोग्न(सिज्दा) गर्दैनन् ।

بَلِ الَّذِيْنَ كَفَرُوْا يُكَذِّبُوْنَ ۝٢٢

२२) बरु काफिरहरूले झुठ्लाउँछन् ।

وَاللّٰهُ اَعْلَمُ بِمَا يُوْعُوْنَ ۝٢٣

२३) यिनीहरूले आफ्ना हृदयमा जुन कुरा लुकाउँछन्, त्यसलाई अल्लाह राम्ररी जान्दछ ।

فَبَشِّرْهُمْ بِعَذَابٍ اَلِيْمٍ ۝٢٤

२४) तसर्थ उनीहरूलाई कष्टदायक यातनाको समाचार सुनाइदिनु ।

اِلَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَهُمْ اَجْرٌ غَيْرُ مَمْنُوْنٍ ۝٢٥

२५) हो, ईमानवालाहरू र असल कर्म गर्नेहरूको निम्ति असीमित र नसकिने पुरस्कार छ ।



## सूरतुल् बुरूज-८५



सूरतुल् बुरूज मक्की हो, यसमा २२ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) आकाशको कसम, जसमा तारामण्डल छ ।

وَالسَّمَآءِ ذَاتِ الْبُرُوْجِ ۙ

२) र त्यस दिनको कसम जसको वाचा छ ।

وَالْيَوْمِ الْمَوْعُوْدِ ۙ

३) उपस्थित हुनेवाला र उपस्थित गराइएकाहरूको कसम ।

وَشَاهِدٍ وَّمَشْهُوْدٍ ۗ

४) कि खाल्टो (खन्नेहरू) नष्ट गरिए ।

قُتِلَ اَصْحٰبُ الْاُخْدُوْدِ ۙ

५) त्यो एउटा आगो थियो (खाल्टोहरू) जसमा इन्धन ( हालिएको थियो) ।

النَّارِ ذَاتِ الْوَقُوْدِ ۙ

६) जबकि उनीहरू त्यसका वरिपरि बसेका थिए ।

اِذْ هُمْ عَلَيْهَا قُعُوْدٌ ۙ

७) र मुस्लिमहरू सँगै जे गर्ने गरेका थिए त्यो आफ्नो सामु देखि रहेका थिए ।

وَّهُمْ عَلٰى مَا يَفْعَلُوْنَ بِالْمُؤْمِنِيْنَ شُهُوْدٌ ۗ

८) यिनीहरूले ती मोमिनहरू सँग (कुनै अन्य अपराधको) बदला लिई रहेका थिएनन्, मात्र यसको लागि कि उनीहरू अल्लाहमाथि ईमान राख्दथे जो अत्यन्त अधिपत्यशाली र प्रशंसनीय छ ।

وَمَا نَقَمُوْا مِنْهُمْ اِلَّآ اَنْ يُّؤْمِنُوْا بِاللّٰهِ الْعَزِيْزِ الْحَمِيْدِ ۙ

९) जसको निम्ति आकाशहरू र पृथ्वीहरूको सत्ता छ र अल्लाहको सामु हरेक वस्तु छ ।

الَّذِي لَهُ مُلْكُ السَّمٰوٰتِ وَالْأَرْضِ ۚ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ شَهِيدٌ ﴿٩﴾

१०) निःसंदेह ज-जसले ईमानवाला पुरुष र ईमानवाली स्त्रीहरूलाई दुःख दिए, अनि प्रायश्चित गरेनन्, त उनीहरूको निम्ति नर्कको यातना हुनेछ र पोलिने यातना छ ।

إِنَّ الَّذِينَ فَتَنُوا الْمُؤْمِنِينَ وَالْمُؤْمِنٰتِ ثُمَّ لَمْ يَتُوبُوا فَلَهُمْ عَذَابُ جَهَنَّمَ وَلَهُمْ عَذَابُ الْحَرِيقِ ﴿١٠﴾

११) निःसन्देह जसले ईमान ल्याए र असल कर्म गरिरहे उनीहरूका निम्ति बगैंचाहरू छन् जसमुनि नहरहरू बगिराखेका छन्, यही नै ठूलो सफलता हो ।

إِنَّ الَّذِينَ اٰمَنُوا وَعَمِلُوا الصّٰلِحٰتِ لَهُمْ جَنّٰتٌ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهٰرُ ۚ ذٰلِكَ الْفَوْزُ الْكَبِيرُ ﴿١١﴾

१२) निःसन्देह तिम्रो पालनकर्ताको पकड अत्यन्त कठोर छ ।

إِنَّ بَطْشَ رَبِّكَ لَشَدِيدٌ ﴿١٢﴾

१३) उसैले पहिलो पटक सृष्टि गर्दछ र उसैले दोस्रो पटक (जीवित) गर्नेछ ।

إِنَّهُ هُوَ يُبْدِئُ وَيُعِيدُ ﴿١٣﴾

१४) र त्यो ठूलो मुक्ति दाता र अत्यन्त प्रेम गर्नेवाला छ ।

وَهُوَ الْغَفُورُ الْوَدُودُ ﴿١٤﴾

१५) सिंहासनको स्वामी, बडो गौरवशाली छ ।

ذُو الْعَرْشِ الْمَجِيدُ ﴿١٥﴾

१६) जे चाहान्छ गरिहाल्छ ।

فَعَّالٌ لِمَا يُرِيدُ ﴿١٦﴾

१७) के तिमीलाई ती सेनाहरूको पनि समाचार पुगेको छ ।

هَلْ أَتٰكَ حَدِيثُ الْجُنُودِ ﴿١٧﴾

१८) (अर्थात्) फिरऔन र समूदको ।

فِرْعَوْنَ وَثَمُودَ ﴿١٨﴾

१९) केही होइन, काफिरहरू त (जानी

بَلِ الَّذِينَ كَفَرُوا فِي تَكْذِيبٍ ﴿١٩﴾

जानी) असत्य कुरा ठह्राउनुमा लागि रहेका छन् ।

२०) र अल्लाहले पनि उनीहरूलाई सबै तिरबाट घेरामा हालिसकेको छ ।

وَّاللّٰهُ مِنْ وَّرَآئِهِمْ مُّحِيْطٌ ﴿٢٠﴾

२१) बरु यो कुरआन धेरै गौरवशाली छ ।

بَلْ هُوَ قُرْاٰنٌ مَّجِيْدٌ ﴿٢١﴾

२२) लौहे महफूज (सुरक्षित फलाम पट्टीका) मा अंकित (छ) ।

فِيْ لَوْحٍ مَّحْفُوْظٍ ﴿٢٢﴾



# सूरतुत्तारिक्-८६

سُوْرَةُ الطَّارِقِ

सूरतुत्तारिक् मक्की हो, यसमा १७ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

وَالسَّمَآءِ وَالطَّارِقِ ①

१) कसम छ आकाश र रातिमा प्रकाशित हुनेवालाको ।

وَمَآ اَدْرٰىكَ مَا الطَّارِقُ ②

२) र तिमीलाई के थाहा कि रातिमा प्रकट हुनेवाला के हो ?

النَّجْمُ الثَّاقِبُ ③

३) त्यो तारा हो, चम्किलो ।

اِنْ كُلُّ نَفْسٍ لَّمَّا عَلَيْهَا حَافِظٌ ④

४) कुनै व्यक्ति यस्तो छैन जसमाथि एउटा फरिश्ता निरीक्षक नियुक्त नहोस् ।

فَلْيَنْظُرِ الْاِنْسَانُ مِمَّ خُلِقَ ⑤

५) मनुष्यलाई आवश्यक छ कि देखोस् कि ऊ कुन कुरोबाट सृष्टि गरिएको छ ।

خُلِقَ مِنْ مَّآءٍ دَافِقٍ ⑥

६) त्यो एउटा उचालिएको पानीबाट जन्मेको छ ।

يَّخْرُجُ مِنْ بَيْنِ الصُّلْبِ وَالتَّرَآئِبِ ⑦

७) जो पिठ्यू र छातीको बीचबाट निस्कन्छ ।

اِنَّهٗ عَلٰى رَجْعِهٖ لَقَادِرٌ ⑧

८) निश्चय नै ऊ उसलाई फर्काइदिने (अर्थात् पुनः जीवित पारिदिने) कुरोमा सामर्थ्यवान छ ।

يَوْمَ تُبْلَى السَّرَآئِرُ ⑨

९) जुन दिन (मनमा) लुकाइएका कुराहरू जाँचिनेछन् ।

| | |
|---|---|
| १०) त त्यसबेला मानिसको साथमा न त त्यसको शक्ति हुनेछ र न कोही सहायक । | فَمَالَهُ مِنْ قُوَّةٍ وَّلَا نَاصِرٍ ۝١٠ |
| ११) आकाशको कसम जसले वृष्टि गर्दछ । | وَالسَّمَآءِ ذَاتِ الرَّجْعِ ۝١١ |
| १२) र धरतीको कसम जुन च्यातिनेवाला छ । | وَالْأَرْضِ ذَاتِ الصَّدْعِ ۝١٢ |
| १३) कि यो वाणी "कुरआन" सटीक फैसला गर्नेवाला वाणी हो । | إِنَّهُ لَقَوْلٌ فَصْلٌ ۝١٣ |
| १४) त्यो कुनै ठट्टा होइन । | وَّمَا هُوَ بِالْهَزْلِ ۝١٤ |
| १५) उनीहरू एउटा षड्यन्त्र गरिराखेका छन् । | إِنَّهُمْ يَكِيدُونَ كَيْدًا ۝١٥ |
| १६) र मैले पनि एउटा चालचली राखेको छु । | وَّأَكِيدُ كَيْدًا ۝١٦ |
| १७) अत: तिमीले काफिरहरूलाई मोहलत दिइहाल, केही दिन उनलाई छाडी दिनु । | فَمَهِّلِ الْكٰفِرِينَ أَمْهِلْهُمْ رُوَيْدًا ۝١٧ |



## सूरतुल् अअ्ला-८७




सूरतुल् अअ्ला मक्की हो, यसमा १९ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

سَبِّحِ اسْمَ رَبِّكَ الْأَعْلَى ١

१) (हे पैगम्बर !) आफ्नो सर्वोच्च पालनकर्ताको नामको गुणगान गर्नु ।

الَّذِي خَلَقَ فَسَوَّى ٢

२) जसले (मानिसलाई) सृष्टि गऱ्यो अनि (त्यसका अङ्गहरूलाई) ठीक (क्रम र समानुपातमा) मिलायो ।

وَالَّذِي قَدَّرَ فَهَدَى ٣

३) र जसले ठीक ठाक निर्धारित गऱ्यो, अनि मार्ग देखायो ।

وَالَّذِي أَخْرَجَ الْمَرْعَى ٤

४) र जसले वनस्पति उमाऱ्यो ।

فَجَعَلَهُ غُثَاءً أَحْوَى ٥

५) अनि त्यसलाई सुकाएर कालो रङ्गका ठुटाहरू बनाइदियो ।

سَنُقْرِئُكَ فَلَا تَنْسَى ٦

६) हामीले तिमीलाई पढाइदिनेछौं, अनि तिमीले बिर्सने छैनौ ।

إِلَّا مَا شَاءَ اللّٰهُ إِنَّهُ يَعْلَمُ الْجَهْرَ وَمَا يَخْفَى ٧

७) तर जुन अल्लाहले चाहन्छ, ऊ प्रत्यक्ष र परोक्षलाई जान्दछ ।

وَنُيَسِّرُكَ لِلْيُسْرَى ٨

८) हामीले तपाईका लागि सजिलो गरिदिनेछौं ।

فَذَكِّرْ إِنْ نَفَعَتِ الذِّكْرَى ٩

९) अतः तपाईले उपदेश गर्दै गर्नुस्, यदि उपदेश लाभप्रद छ ।

سَيَذَّكَّرُ مَنْ يَخْشَى ١٠

१०) त्यसले उपदेश प्राप्त गरिहाल्छ, जसलाई भय हुनेछ ।

وَيَتَجَنَّبُهَا الْأَشْقَى ﴿١١﴾

११) हो, दुर्भाग्यवाला त्यसबाट पन्छिनेछ ।

الَّذِي يَصْلَى النَّارَ الْكُبْرَىٰ ﴿١٢﴾

१२) जो ठूलो आगोमा पर्नेछ ।

ثُمَّ لَا يَمُوتُ فِيهَا وَلَا يَحْيَىٰ ﴿١٣﴾

१३) अनि त्यसमा न मर्ने छ र न बाँच्नेछ ।

قَدْ أَفْلَحَ مَن تَزَكَّىٰ ﴿١٤﴾

१४) निःसन्देह त्यो सफल भइहाल्यो जसले आफूलाई शुद्ध पार्‍यो ।

وَذَكَرَ اسْمَ رَبِّهِ فَصَلَّىٰ ﴿١٥﴾

१५) र आफ्नो पालनकर्ताको नामको स्मरण गर्‍यो र नमाज पढ्ने गर्‍यो।

بَلْ تُؤْثِرُونَ الْحَيَاةَ الدُّنْيَا ﴿١٦﴾

१६) तर तिमीहरूले त सांसारिक भौतिक जीवनलाई प्राथमिकता दिन्छौ ।

وَالْآخِرَةُ خَيْرٌ وَأَبْقَىٰ ﴿١٧﴾

१७) जब कि आखिरत धेरै उत्तम र शेष रहनेवाला छ ।

إِنَّ هَٰذَا لَفِي الصُّحُفِ الْأُولَىٰ ﴿١٨﴾

१८) निःसन्देह यही कुरा पहिलाका किताबहरूमा पनि छ ।

صُحُفِ إِبْرَاهِيمَ وَمُوسَىٰ ﴿١٩﴾

१९) अर्थात "इब्राहीम(अ)" र "मूसा(अ.)का" किताबहरूमा ।



## सूरतुल् ग़ाशियः -८८



سُورَةُ الغَاشِيَةِ

सूरतुल् ग़ाशियः मक्की हो, यसमा २६ आयतहरू छन् ।

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

هَلْ أَتٰىكَ حَدِيثُ الْغَاشِيَةِ ①

१) के तिमीलाई पनि त्यस घेरीहाल्ने कियामतको समाचार पुगेको छ ?

وُجُوهٌ يَّوْمَئِذٍ خَاشِعَةٌ ②

२) त्यस दिन धेरै अनुहारहरू अपमानित हुनेछन् ।

عَامِلَةٌ نَّاصِبَةٌ ③

३) कठिन परिश्रममा परेका, थाकिएका हुनेछन् ।

تَصْلٰى نَارًا حَامِيَةً ④

४) उनी धपधपी बलेको आगोमा प्रवेश गर्नेछन् ।

تُسْقٰى مِنْ عَيْنٍ اٰنِيَةٍ ⑤

५) उनीहरूलाई उम्लिराखेको स्रोतको तातो पानी पिलाइनेछ ।

لَيْسَ لَهُمْ طَعَامٌ إِلَّا مِنْ ضَرِيعٍ ⑥

६) उनीहरूका लागि काँडावाला रुख बाहेक अरु केही खानेकुरा हुनेछैन ।

لَّا يُسْمِنُ وَلَا يُغْنِي مِنْ جُوعٍ ⑦

७) जसले न मोटो गर्नेछ न भोक मेटाउनेछ ।

وُجُوهٌ يَّوْمَئِذٍ نَّاعِمَةٌ ⑧

८) त्यसदिन कैयन् अनुहारहरू प्रफुल्लित र संतुष्ट हुनेछन् ।

لِّسَعْيِهَا رَاضِيَةٌ ⑨

९) आफ्नो प्रयासमा प्रसन्न ।

فِي جَنَّةٍ عَالِيَةٍ ⑩

१०) उच्च र शानदार स्वर्गमा हुनेछन् ।

لَّا تَسْمَعُ فِيهَا لَاغِيَةً ⑪

११) जसमा कुनै व्यर्थकुरा सुन्ने छैनन् ।

فِيهَا عَيْنٌ جَارِيَةٌ ⑫

१२) त्यसमा झरनाहरू प्रवाहित हुनेछन् ।

فِيهَا سُرُرٌ مَّرْفُوعَةٌ ﴿١٣﴾

१३) र अग्ला-अग्ला पलंगहरू हुनेछन् ।

وَأَكْوَابٌ مَّوْضُوعَةٌ ﴿١٤﴾

१४) प्यालाहरू राम्ररी सजाइएर राखिएका हुनेछन्) ।

وَنَمَارِقُ مَصْفُوفَةٌ ﴿١٥﴾

१५) र क्रमैसित मसनदहरू सजाइएका हुनेछन् ।

وَزَرَابِيُّ مَبْثُوثَةٌ ﴿١٦﴾

१६) र मखमली ओच्छ्यानहरू ओछ्याइएका हुनेछन् ।

أَفَلَا يَنظُرُونَ إِلَى الْإِبِلِ كَيْفَ خُلِقَتْ ﴿١٧﴾

१७) के उनीहरूले ऊँटतिर देख्दैनन् कि तिनीहरू कुन तरिकाले पैदा गरिएका छन् ।

وَإِلَى السَّمَاءِ كَيْفَ رُفِعَتْ ﴿١٨﴾

१८) र आकाशतिर के कस्तो उच्च गरिएकोछ ?

وَإِلَى الْجِبَالِ كَيْفَ نُصِبَتْ ﴿١٩﴾

१९) र पहाडतिर के कुन प्रकारले खडा गरिएकोछ ?

وَإِلَى الْأَرْضِ كَيْفَ سُطِحَتْ ﴿٢٠﴾

२०) र धरतीतिर कि कसरी बिछ्याइएको छ?

فَذَكِّرْ إِنَّمَا أَنتَ مُذَكِّرٌ ﴿٢١﴾

२१) तसर्थ तपाईले उपदेश गर्ने गर्नुस् किनकि तपाई मात्र उपदेश गर्नेवाला हौ ।

لَّسْتَ عَلَيْهِم بِمُصَيْطِرٍ ﴿٢٢﴾

२२) तपाई उनीहरूमाथि संरक्षक होइनौ ।

إِلَّا مَن تَوَلَّىٰ وَكَفَرَ ﴿٢٣﴾

२३) हो, जो विमुख हुन्छ र कुफ्र गर्छ ।

فَيُعَذِّبُهُ اللَّهُ الْعَذَابَ الْأَكْبَرَ ﴿٢٤﴾

२४) त अल्लाहले त्यसलाई ठूलो सजाय दिने छ,

إِنَّ إِلَيْنَا إِيَابَهُمْ ﴿٢٥﴾

२५) नि:सन्देह उनीहरूलाई हाम्रो पासमा फर्केर आउनुपर्नेछ ।

ثُمَّ إِنَّ عَلَيْنَا حِسَابَهُم ﴿٢٦﴾

२६) अनि हामीले नै उनको हिसाब लिनेछौं ।

# सूरतुल् फ़ज्र-८९




सूरतुल् फ़ज्र मक्की हो, यसमा ३० आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسۡمِ اللّٰهِ الرَّحۡمٰنِ الرَّحِيۡمِ

१) फज्र (उषाकाल) को क़सम ।

وَالۡفَجۡرِۙ‏ ①

२) र दश रातहरूको क़सम ।

وَلَيَالٍ عَشۡرٍۙ‏ ②

३) र जोड र बिजोड (सम-विसम) को कसम ।

وَّالشَّفۡعِ وَالۡوَتۡرِۙ‏ ③

४) र रातको क़सम, जब यो जान थाल्छ ।

وَالَّيۡلِ اِذَا يَسۡرِ‌ۚ‏ ④

५) के यी कुराहरूको क़सम बुद्धिमानीहरूका लागि पर्याप्त छन् ?

هَلۡ فِىۡ ذٰ لِكَ قَسَمٌ لِّذِىۡ حِجۡرٍؕ‏ ⑤

६) के तपाईले देख्नु भएन कि तपाईको पालनकर्ताले आदहरूसँग के गऱ्यो ?

اَلَمۡ تَرَ كَيۡفَ فَعَلَ رَبُّكَ بِعَادٍ ۙ‏ ⑥

७) स्तम्भजस्ता "इरम" लामो कदवालाको साथ ।

اِرَمَ ذَاتِ الۡعِمَادِ ۙ‏ ⑦

८) यी सम्पूर्ण सृष्टिमा यिनीहरूको सदृश कुनै समुदाय पैदा गरिएको थिएन् ।

الَّتِىۡ لَمۡ يُخۡلَقۡ مِثۡلُهَا فِى الۡبِلَادِ ۙ‏ ⑧

९) र समूदहरूसँग (के गऱ्यो) जो बेसीमा ठूल ठूला ढुङ्गा काट्दथे ।

وَثَمُوۡدَ الَّذِيۡنَ جَابُوا الصَّخۡرَ بِالۡوَادِ ۙ‏ ⑨

१०) र फिरऔनसँग जसले मेखहरू राख्दथ्यो ?

وَفِرۡعَوۡنَ ذِى الۡاَوۡتَادِ ۙ‏ ⑩

الَّذِينَ طَغَوْا فِي الْبِلَادِ ﴿١١﴾

११) यिनीहरू सबैले देशहरूमा अटेरीपना गरिराखेका थिए ।

فَأَكْثَرُوا فِيهَا الْفَسَادَ ﴿١٢﴾

१२) र यहां धेरै उत्पातहरू मचाई राखेका थिए ।

فَصَبَّ عَلَيْهِمْ رَبُّكَ سَوْطَ عَذَابٍ ﴿١٣﴾

१३) अन्ततः तिम्रो पालनकर्ताले उनीहरूमाथि यातनाको कोर्रा बर्सायो ।

إِنَّ رَبَّكَ لَبِالْمِرْصَادِ ﴿١٤﴾

१४) निःसन्देह तिम्रो पालनकर्ता हेरी घातमाछ ।

فَأَمَّا الْإِنْسَانُ إِذَا مَا ابْتَلَاهُ رَبُّهُ فَأَكْرَمَهُ وَنَعَّمَهُ فَيَقُولُ رَبِّي أَكْرَمَنِ ﴿١٥﴾

१५) तर मानिसको अवस्था यो छ कि जब उसको रबले उसको परीक्षा गर्दछ र उसलाई प्रतिष्ठा र अनुग्रह प्रदान गर्दछ तब त्यसले भन्दछ कि मेरो पालनकर्ताले मलाई प्रतिष्ठित गऱ्यो ।

وَأَمَّا إِذَا مَا ابْتَلَاهُ فَقَدَرَ عَلَيْهِ رِزْقَهُ فَيَقُولُ رَبِّي أَهَانَنِ ﴿١٦﴾

१६) र जब उसले उसको परीक्षा यसप्रकार गर्दछ कि उसको जीविका संकुचित गरिदिन्छ । तब उसले भन्दछ कि मेरो रबले मलाई अपमानित गऱ्यो ।

كَلَّا بَلْ لَا تُكْرِمُونَ الْيَتِيمَ ﴿١٧﴾

१७) यस्तो कदापि होइन, बरु तिमीहरूले नै अनाथको सम्मान गर्दैनौ ।

وَلَا تَحَاضُّونَ عَلَىٰ طَعَامِ الْمِسْكِينِ ﴿١٨﴾

१८) र न गरीबलाई खुवाउनको लागि एक-अर्कालाई प्रोत्साहन गर्दछौ ।

وَتَأْكُلُونَ التُّرَاثَ أَكْلًا لَمًّا ﴿١٩﴾

१९) र मृतकको सारा माल समेटी खाइदिन्छौ ।

